ततोविराडजायतविराजोऽअधिपूरुषः ॥
सजातोऽअत्यरिच्यतपश्चाद्भूमिमथोपुरः ॥५॥
तस्माद्यज्ञात्सर्वहुतःसम्भृतम्पृषदाज्ज्यम् ॥
पशूँस्ताँश्चक्रेवायव्यानारण्याग्राम्म्याश्चये ॥६॥
तस्माद्यज्ञात्सर्वहुतऽऋचःसामानिजज्ञिरे ॥
छन्दांसिजज्ञिरेतस्म्माद्यजुस्तस्म्मादजायत ॥७॥
तस्म्मादश्श्वाऽअजायन्तयेकेचोभयादतः ॥
गावोहजज्ञिरेतस्मात्तस्म्माज्जाताऽअजावयः ॥८॥
तंयज्ञम्बर्हिषिप्प्रौक्षन्पुरुषञ्जातमग्रतः ॥
तेनदेवाऽअयजन्तसाध्याऽऋषयश्श्चये ॥९॥

---

उनै परमपुरुष सृष्टिको आरम्भमा विराट्रूप ब्रह्माण्ड र त्यसबाट विराट ब्रह्माण्डका अभिमानी देवता हिरण्यगर्भको रूपमा प्रकट हुनुभयो । उनै विराट् पुरुषले उत्पत्तिसंगै आफ्नो महत्तालाई विस्तारित गर्नुभयो र त्यसपछि देवता, मनुष्य आदि पुरीको निर्माण गर्नुभयो ॥५॥ उनै सर्वात्मा पुरुषले आफ्नो यजन हुने यज्ञद्वारा पृषदाज्य (हवि) को सृष्टि गर्नुभयो र यसका साथै वायु देवतावाला मृग आदि वनवासी पशु र अश्व आदि ग्रामवासी पशुहरूको समेत सृष्टि गर्नुभयो ॥६॥ उनै सर्वहुत यज्ञपुरुषद्वारा ऋग्वेद र सामवेद प्रकट भए । उनैबाट सबै किसिमका छन्दहरू प्रकट भए र यजुर्वेद पनि उनैबाट पैदा भयो ॥७॥ उनै यज्ञपुरुषबाट यज्ञका उपयोगी घोडाहरू उत्पन्न भए । यस्तै अरु ती प्राणीहरू उत्पन्न भए जो तलमाथि दाँत हुनेवाला थिए । उनै यज्ञपुरुषबाट गाई उत्पन्न भए र उनैबाट भेडाबाख्रा आदि अन्य पशुहरू पनि पैदा भए ॥८॥ सृष्टिसाधनयोग्य देवता र ऋषिहरूले मानसयज्ञको सिद्धिका लागि सृष्टिभन्दा पहिले उत्पन्न भएका ती यज्ञसाधनभूत विराट् पुरुषलाई प्रोक्षण गरे र उनै विराट् पुरुषद्वारा यो यज्ञ सम्पन्न गरे ॥९॥

यत्पुरुषंव्यदधुःकतिधाव्यकल्पयन्॥
मुखङ्किमस्यासीत्किम्बाहूकिमूरूपादाऽउच्च्येते॥१०॥
ब्ब्राह्मणोस्यमुखमासीद्बाहूराजन्न्यःकृतः॥
ऊरूतदस्ययद्वैश्यःपद्भ्याꣳशूद्रोऽअजायत॥११॥
चन्द्रमामनसोजातश्चक्षोःसूर्य्योऽअजायत॥
श्श्रोत्राद्वायुश्चप्राणश्च्चमुखादग्निरजायत॥१२॥
नाभ्भ्याऽआसीदन्तरिक्षꣳशीर्ष्णोद्यौःसमवर्त्तत॥
पद्भ्याम्भूमिर्द्दिशःश्श्रोत्रात्तथालोकाँ२॥ऽअकल्पयन्॥१३॥
यत्पुरुषेणहविषादेवायज्ञमतन्न्वत॥
वसन्तोस्यासीदाज्ज्यङ्ग्रीष्मऽइध्मःशरद्धविः॥१४॥

जब यज्ञसाधनभूत यी विराट् पुरुषको प्रेरणाले महत्तत्त्व अहङ्कार आदिको क्रमशः उत्पत्ति भयो तब त्यसका कति प्रकारहरू कल्पना गरिए? उनका मुख, हात, जाँघ र पाउहरूको स्वरूप के हो ? ॥१०॥ ती यज्ञरूप विराट् पुरुषका मुखस्थानीय ब्राह्मणहरू हुन्। क्षत्रीयहरू भुजास्थानीय हुन्। वैश्यहरू जङ्घास्थानीय हुन् र शूद्रहरू चरणस्थानीय हुन् ॥११॥ विराट् पुरुषको मनबाट चन्द्रमा उत्पन्न भए। आँखाबाट सूर्य प्रकट भए। कानबाट वायु र प्राण उत्पन्न भए र मुखबाट अग्नि उत्पन्न भए ॥१२॥ उनै विराट् पुरुषको नाभिबाट अन्तरिक्ष र शिरबाट स्वर्ग प्रकट भयो । यस्तै पाउबाट भूमि र कानबाट दिशाहरूको उत्पत्ति भयो । यसैगरी देवताहरूले उनै विराट्पुरुषका विभिन्न अङ्गबाट अरु लोकहरूको कल्पना गरे ॥१३॥ जब यिनै विराट्पुरुषको देहका अवयवलाई हवि बनाएर विद्वान्हरूले ज्ञानयज्ञको रचना गरे तब त्यस यज्ञमा वसन्त ऋतु घ्यू, ग्रीष्म ऋतु समिधा र शरद् ऋतु हविको रूपमा रहे ॥१४॥

सुप्तास्यासन्परिधयुस्त्रिःसुप्तसुमिधःकृताः ॥
देवायद्युज्ञन्तन्वानाऽअबध्नन्पुरुषम्पुशुम् ॥ १५ ॥
युज्ञेनयुज्ञमयजन्तदेवास्तानिधर्म्माणिप्प्रथमान्यासन् ॥
तेहुनाकम्महिमानःसचन्तुयत्रपूर्वेसाध्याःसन्तिदेवाः ॥ १६ ॥

*॥ ॐ शिरसे स्वाहा ॥*

अद्भ्यःसम्भृतःपृथिव्यैरसाच्चविश्श्वकर्म्मणःसमवर्त्तताग्ग्रे ॥
तस्युत्त्वष्टाविदधद्रूपमैतितन्मर्त्त्यस्यदेवुत्वमाजानुमग्ग्रे ॥ १७ ॥

यो मानसयज्ञको अनुष्ठान गर्दै देवताहरूले यिनै विराट्पुरुषलाई पशुको रूपमा भावित गरे । त्यतिबेला गायत्री आदि सात छन्दहरू सात परिधि बने । बाह्र महिना, पाँच ऋतु, तीन लोक र सूर्य समेत एक्काइस समिधा बने अथवा गायत्री आदि सात, अतिजगती आदि सात र कृति आदि सात छन्दहरू समिधा बने ॥१५॥ देवताहरूले विराट पुरुषका अवयवहरूलाई हविको रूपमा कल्पना गर्दै यो मानस यज्ञमा यज्ञपुरुष भगवान्को आराधना गरे । त्यसपछि यिनै वस्तुहरू भगवान्को उपासनाका साधन बने । जुन स्वर्गमा पुराना साध्य देवताहरू रहन्छन् त्यही दुःखरहित लोकमा यज्ञपुरुष भगवान्को उपासना गर्ने भक्तहरू पुग्छन् ॥१६॥

*उत्तरनारायणसूक्त–*

पृथिवी जल आदिको रसद्वारा परिपुष्ट, पञ्चमहाभूतात्मक सम्पूर्ण विश्वको निर्माण गर्ने, विराट् पुरुषभन्दा पनि पहिले विद्यमान रसस्वरूपी महानारायण पुरुष सर्वप्रथम त्वष्टा (आदित्य)का रूपमा प्रकट हुनुहुन्छ । पुरुषमेध यज्ञ गर्ने मनुष्यका लागि यी आदित्यरूपमा अवतरित आद्य परमात्मा नै मुख्य आराध्य देवता हुनुहुन्छ ॥१७॥

वेदाहमेतम्पुरुषम्महान्तमादित्यवर्ण्णंतमसः परस्तात् ॥
तमेवविदित्त्वातिमृत्युमेतिनान्न्यः पन्थाविद्यतेयनाय ॥१८॥
प्प्रजापतिश्च्चरतिगर्ब्भेऽअन्तरजायमानोबहुधाविजायते ॥
तस्ययोनिम्परिपश्यन्तिधीरास्तस्मिन्हतस्थुर्ब्भुवनानिविश्श्वा ॥१९॥
योदेवेब्भ्यऽआतपतियोदेवानाम्पुरोहितः ॥
पूर्व्वोयोदेवेब्भ्योजातोनमोरुचायब्ब्राह्मये ॥२०॥
रुचम्ब्राह्मञ्जनयन्तोदेवाऽअग्ग्रेतदब्ब्रुवन् ॥
यस्त्वैवम्ब्ब्राह्मणोविद्यात्तस्यदेवाऽअसन्वशे ॥२१॥

यी अविद्याले शून्य आदित्यझैँ प्रकाशमान तमोगुणभन्दा परका ज्ञानरूप परमपुरुष महानारायणलाई म जान्दछु । ती आदित्यरूप महानारायण परमात्मालाई जानिसकेपछि जोसुकैले पनि मृत्युलाई अतिक्रमण गरी अमृतत्वपद प्राप्त गर्न सक्दछ । अमृतत्व (मोक्ष) पदको प्राप्तिका लागि यसदेखि बाहेक अर्को कुनै उपाय छैन ॥१८॥ सर्वात्मा प्रजापति अन्तर्यामीको रूपमा गर्भभित्रबाट प्रकट हुनुहुन्छ । जन्म नलिने भएर पनि ती परमात्मा देवता, मनुष्य, पशुपक्षी आदि योनिमा नानारूपले प्रकट हुनुहुन्छ । ब्रह्मज्ञानी पुरुषहरू ब्रह्माको उत्पत्तिस्थान भएका ती परमपुरुषलाई सबैतिर देख्दछन् जसमा निश्चित रूपमा सबै लोक अवस्थित छन् ॥१९॥ जुन आदित्यरूप प्रजापति सबै देवतालाई शक्ति दिन सर्वदा प्रकाशमान हुनुहुन्छ । जुन भगवान्ले पहिलेदेखि ब्रह्मा, विष्णु, महेश आदि देवताको हित गर्दै आउनुभएको छ र जो सबैका पूज्य हुनुहुन्छ । जो सबै देवताभन्दा पहिले प्रकट हुनुभएको हो । त्यस्ता ब्रह्मज्योतिस्वरूप परमपुरुषलाई हामी प्रणाम गर्दछौं ॥२०॥ इन्द्रियका अधिष्ठाता देवताहरूले सुन्दर ब्रह्मज्योतिरूप आदित्यदेवलाई आविर्भूत गर्दै सर्वप्रथम यो कुरा भन्न थाले– हे आदित्यदेव ! जुन ब्राह्मणले हजुरको यो वास्तविक स्वरूपलाई जान्दछन् तिनका अधीनमा सम्पूर्ण देवताहरू हुने गर्दछन् ॥२१॥

श्श्रीश्च्चतेलक्ष्मीश्च्चपत्क्न्यावहोरात्रेपाश्र्वेनक्षत्राणिरूपमश्श्विनौव्यात्तम्॥
इष्णन्निषाणामुम्मंऽइषाणसर्वलोकम्मंऽइषाण॥२२॥

॥ ॐ शिखायै वषट् ॥

॥ इति द्वितीयोऽध्यायः ॥

# अथ तृतीयोऽध्यायः

हरिः ॐ आशुश्शिशानोवृषभोनभीमोघनाघनश्क्षोभणश्च्चर्षणीनाम्॥
सङ्क्रन्दनोनिमिषऽएकवीरश्शतꣳसेनाऽअजयत्साकमिन्द्रः॥१॥
सङ्क्रन्दनेनानिमिषेणजिष्णुनायुत्त्कारेणदुश्च्यवनेनधृष्णुना॥
तदिन्द्रेणजयततत्सहध्वंय्युधोनरऽइषुहस्तेनवृष्ष्णा॥२॥

---

हे भगवन् ! श्री र लक्ष्मी हजुरका दुई पत्नी हुन् । ब्रह्माका दिन–रात हजुरका पार्श्व हुन् । आकाशमा रहेका नक्षत्रहरू हजुरका स्वरूप नै हुन् । अश्विनी (अन्तरिक्ष) हजुरको विकसित मुख हो । हजुर सँधै मेरो कल्याणको कामना गर्नुहोस् । मलाई आफ्नो कल्याणमय लोक दिलाउनुहोस् र सम्पूर्ण योगैश्वर्यहरू प्रदान गर्नुहोस् ॥२२॥

*॥ द्वितीय अध्याय समाप्त ॥*

## *तृतीय अध्याय*

*अप्रतिरथ (इन्द्र) सूक्त–*

शीघ्रगामी, वज्रजस्तै तीखा, वर्षाको जस्तो स्वभाव भएका, भयङ्कर, शत्रुलाई खतम पार्ने, मनुष्यहरूलाई डर दिने, बारम्बार गर्जना गर्ने, देवता भएका कारणले आँखा नझिम्क्याउने अत्यन्त सावधान र अद्वितीय पराक्रमी इन्द्रदेवले एकैचोटी शत्रुका अनन्त सेनालाई जित्न सक्नुहुन्छ ॥१॥ हे युद्धरत मनुष्यहरू हो ! भयरहित शब्द गर्ने, अनेकौँ युद्ध जित्ने, निरन्तर युद्धरत, सावधान भई हातमा बाण लिने, जयशील र आफू अपराजित भई कामनाको वर्षा गर्नेवाला इन्द्रका प्रभावले ती शत्रुसेनालाई जित र आफ्ना अधीनमा राखी संहार गर ॥२॥

सऽइषुहस्तैःसनिषङ्गिभिर्वशीसꣳस्रष्टासयुधऽइन्द्रोगणेन ॥
सꣳसृष्टजित्सोमपाबाहुशर्ध्युग्ग्रधन्वाप्रतिहिताभिरस्ता ॥ ३ ॥
बृहस्पतेपरिदीयारथेनरक्षोहामित्राँ२ ॥ऽअपबाधमानः ॥
प्प्रभञ्जन्सेनाःप्प्रमृणोयुधाजयन्नस्म्माकमेध्यवितारथानाम् ॥ ४ ॥
बलविज्ञायस्थविरःप्प्रवीरःसहस्वान्वाजीसहमानऽउग्ग्रः ॥
अभिवीरोऽअभिसत्त्वासहोजाजैत्रमिन्द्ररथमातिष्ठगोवित् ॥ ५ ॥
गोत्रभिदङ्गोविदंवज्ज्रबाहुञ्जयन्तमज्ज्मप्प्रमृणन्तमोजसा ॥
इमꣳसजाताऽअनुवीरयध्वमिन्द्रꣳसखायोऽअनुसꣳरभध्वम् ॥ ६ ॥

---

ती जितेन्द्रिय, शत्रुलाई आफ्नो अधीनमा राख्ने, हातमा बाण लिएका, युद्धमा ठूलै धनुर्धारीलाई पनि हाँक दिने इन्द्रले युद्धमा शत्रुको समूहलाई एकैचोटि जित्न सक्नुहुन्छ । यजमानहरूको यज्ञमा सोमपान गर्ने, बलवान् र उत्कृष्ट धनुर्धारी ती इन्द्रले आफ्ना धनुबाट छुटेका बाणद्वारा शत्रुलाई नाश गरिदिनुहुन्छ । त्यस्ता इन्द्रले हाम्रो रक्षा गर्नुहोस् ॥३॥ हे वाणीका अधिष्ठाता बृहस्पति ! हजुरले रथबाट सबैतिर विचरण गर्दै राक्षसहरूलाई नाश गरिदिनुहोस् । शत्रुलाई पीडित गर्दै र उनका सेनालाई नष्ट गर्दै ती दुष्ट हिंस्रकहरूलाई युद्धमा जित्नुहोस् र हाम्रा रथहरूको रक्षा गर्नुहोस् ॥४॥ हे इन्द्र ! हजुर अरुको बललाई जान्नेवाला, अत्यन्त पुराना, वीर, बलवान्, अन्नवान्, युद्धमा क्रूर, चारैतिर वीरयोद्धाहरूले युक्त, सबैतिरबाट परिचारकहरूले युक्त, बलबाट नै उत्पन्न भएका र शत्रुहरूलाई नष्ट गर्नेवाला हुनुहुन्छ । हाम्रो स्तुतिको रहस्य बुझ्नेवाला हजुर आफ्ना जयशाली रथमा सुशोभित हुनुहोस् ॥५॥ हे समानजन्मवाला देवताहरू हो ! असुरकुलका नाशक, वेदवाणीका ज्ञाता, हातमा बज्रधारण गर्ने, युद्धमा विजयी र आफ्नो बलद्वारा शत्रुको संहार गर्ने यी इन्द्रदेवलाई पराक्रम देखाउन उत्साह थपिदिनुहोस् र यिनलाई उत्साहित गर्दै आफैं पनि उत्साहले परिपूर्ण हुनुहोस् ॥६॥

अभिगोत्राणिसहसागाहमानोदयोवीरःशतमन्युरिन्द्रः ॥
दुश्च्यवनःपृतनाषाडयुध्योस्माकꣳसेनाऽअवतुप्प्रयुत्सु ॥७॥
इन्द्रऽआसान्नेताबृहस्प्पतिर्द्दक्षिणायज्ञःपुरऽएतुसोमः ॥
देवसेनानामभिभञ्जतीनाञ्जयन्तीनाम्मरुतोयन्त्वग्ग्रम् ॥८॥
इन्द्रस्यवृष्ष्णोवरुणस्यराज्ञऽआदित्यानाम्मरुताꣳशर्द्धऽउग्ग्रम् ॥
महामनसाम्भुवनच्च्यवानाङ्घोषोदेवानाञ्जयतामुदस्थात् ॥९॥
उद्धर्षयमघवन्नायुधान्न्युत्सत्त्वनाम्मामकानाम्मनाꣳसि ॥
उद्वृत्रहन्वाजिनांवाजिनान्न्युद्रथानाञ्जयतांय्यन्तुघोषाः ॥१०॥
अस्माकमिन्द्रःसमृतेषुध्वजेष्ष्वस्म्माकंय्याऽइषवस्ताजयन्तु ॥
अस्माकंवीराऽउत्तरेभवन्त्वस्म्माँ२ ॥ऽउदेवाऽअवताहवेषु ॥११॥

शत्रुमाथि दया नगर्ने, पराक्रमी, बहुधा क्रोधयुक्त, सयौं यज्ञकर्म गर्ने, अरुबाट नष्ट नहुने, शत्रुसेनालाई संहार गर्ने र अरु कसैबाट पनि प्रहरित हुन नसक्ने इन्द्रले असुरकुललाई संग्राममा एकैचोटि नष्ट गर्दै हाम्रा सेनालाई बचाऊन् ॥७॥ बृहस्पति र इन्द्र सबै शत्रुसेनालाई नष्ट गर्ने विजयशाली देवसेनाका अधिपति हुन् । यज्ञपुरुष भगवान् विष्णु दक्षिणा सोम र यिनीहरूका अगाडि हिंडून् । सबै मरुद्गण पनि सेनाका अगाडि अगाडि जाऊन् ॥८॥ सम्पूर्ण लोकलाई नष्ट गर्न सक्ने र विजय प्राप्त गर्नेवाला देवता, राजा वरुण, द्वादशादित्य, मरुद्गण, कामना अनुसारको वर्षा गराउने इन्द्रदेवको सभाबाट जयजय ध्वनि उठिरहेको छ ॥९॥ हे इन्द्र ! हजुरले आफ्ना शस्त्रहरूलाई राम्ररी सुसज्जित गरिदिनुहोस् । हाम्रा वीर सैनिकहरूको मनमा उत्साह भरिदिनुहोस् । हे वृत्रनाशक इन्द्र ! हजुरले हाम्रा घोडालाई छिटो हिंड्ने बनाइदिनुहोस् । विजयशील रथबाट जयघोषको उच्चारण भइरहोस् ॥१०॥ शत्रुका ध्वजासंग हाम्रा ध्वजाहरूको जम्का भेट हुने बेला इन्द्रले हाम्रो रक्षा गरून् । हाम्रा बाणले शत्रुलाई नष्ट गर्दै उनीहरूमाथि विजय प्राप्त गरून् र हाम्रा वीर सैनिकहरू शत्रुका सैनिकभन्दा श्रेष्ठ बनून् । हे देवता हो ! हजुरहरूले संग्राममा हाम्रो रक्षा गर्नुहोस् ॥११॥

अमीषाञ्चित्तम्प्रतिलोभयन्तीगृहाणाङ्गान्न्यप्वेपरैहि॥
अभिप्प्रेहिनिर्द्दहहृत्सुशोकैरन्धेनामित्त्रास्तमसासचन्ताम्॥१२॥
अवसृष्टापरापतशरव्ये ब्ब्रह्मसꣳशिते॥
गच्छामित्त्रान्प्प्रपद्यस्वमामीषाङ्कञ्चनोच्छिषः॥१३॥
प्रेताजयतानरऽइन्द्रोवःशर्म्मयच्छतु॥
उग्ग्रावः सन्तुबाहवोनाधृष्ष्यायथासथ॥१४॥
असौयासेनामरुतःपरेषामब्भ्यैतिनऽओजसास्प्पर्द्धमाना॥
ताङ्गूहततमसापव्व्रतेनयथामीऽअन्न्योऽअन्न्यन्नजानन्॥१५॥

हे शत्रुहरूलाई कष्ट दिनेवाला रोगका अधिष्ठाता देव ! यी शत्रुहरूको चित्तलाई मोहित गर्दै यिनका शिर आदि अङ्गलाई लिनुहोस् र टाढा जानुहोस् । फेरी उनीहरूका नजिक गएर उनका हृदयलाई शोकदग्ध बनाइदिनुहोस्। हाम्रा शत्रुहरू गाढा ढकमक्क अन्धकारबाट ढाकिऊन्॥१२॥ वेदमन्त्रद्वारा तिखारिएका बाणरूप हे ब्रह्मास्त्र हो ! मबाट प्रक्षिप्त भएका तिमीहरू शत्रुसेनामा जाओ, शत्रुका नजिक जाओ र उनका शरीरमा प्रवेश गर । यिनका कुनैपनि समूहलाई जीवित नछोड ॥१३॥ हे वीरपुरुष हो ! तिमीहरूले शत्रुका सेनामा छिटै आक्रमण गर र उनीहरूमाथि विजय प्राप्त गर । इन्द्रले तिमीहरूको कल्याण गरून् । तिम्रा हात शस्त्र उठाउन समर्थ हऊन् । जसबाट कुनै हालतमा पनि तिमीहरू शत्रुबाट पराजित नबन ॥१४॥ हे मरुद्गण ! यो शत्रुको सेना आफ्नो बलले हामीसंग सेखी गर्दै हाम्रा सामने आइरहेको छ । यिनीहरूलाई अकर्मण्य बनाइदेऊ, जसबाट ती शत्रुसेनाका सैनिकहरू एक आपसमा परिचित नहोऊन् र परस्पर शस्त्र चलाएर आफैं नष्ट होऊन् ॥१५॥

यन्त्रबाणाः सम्पतन्तिकुमाराविशिखाऽइव॥
तन्नऽइन्द्रोबृहस्पतिरदितिः शर्म्मयच्छतुविश्वाहाशर्म्मयच्छतु॥१६॥
मर्म्माणितेवर्म्मणाच्छादयामिसोमस्त्वाराजामृतेनानुवस्ताम्॥
उरोर्वरीयोवरुणस्तेकृणोतुजयन्तन्त्वानुदेवामदन्तु॥१७॥

॥ ॐ कवचाय हुम् ॥

॥ इति तृतीयोऽध्यायः ॥

# अथ चतुर्थोऽध्यायः

हरिः ॐ विभ्राड्बृहत्पिबतुसोम्म्यम्मध्वायुर्दधद्यज्ञपतावविह्रुतम्॥
वातजूतोयोऽअभिरक्षतित्मनाप्प्रजाः पुपोषपुरुधाविराजति॥१॥

---

जुन युद्धमा शत्रुले चलाएका बाणहरू विकीर्ण शिखावाला साना–साना बालकहरू झैं यताउति लडिरहेका छन्, त्यस्ता युद्धमा इन्द्र, बृहस्पति र देवमाता अदितिले हामीलाई जिताऊन् । यी सबै देवताहरूले हाम्रो कल्याण गरून् ॥१६॥ हे यजमान ! म तिमीहरूका मर्मस्थानलाई कवचद्वारा ढाकिदिन्छु । ब्राह्मणका राजा सोमले तिमीलाई मृत्युबाट बचाउने किसिमको कवचले सुरक्षित गरून् । वरुणले तिम्रा कवचलाई अत्यन्त मजबुत बनाऊन् र विजयतिर उन्मुख भएका तिमीलाई सबै देवताहरूले उत्साहित बनाऊन् ॥१७॥

॥ तृतीय अध्याय समाप्त ॥

## चतुर्थ अध्याय

मैत्रसूक्त–

हे सूर्य भगवन् ! यजमानलाई अखण्डित आयु थप्दै हजुरले यो मीठो सोमरूप हविग्रहण गर्नुहोस् । जुन सूर्यदेव वायुबाट प्रेरित भई आत्माद्वारा प्रजाको पालन र पोषण गर्दछन् साथै ती सूर्यदेव अनेक रूपमा प्रकाशित भइरहेका छन् ॥१॥

उदुत्यञ्जातवेदसन्देवंवहन्तिकेतवः॥
दृशेविश्श्वायसूर्य्यम्॥२॥
येनापावकचक्षसाभुरण्ण्यन्तञ्जनाँ२॥ऽअनु॥
त्वंवरुणपश्श्यसि॥३॥
दैव्यावद्ध्वर्य्यूऽआगतहं रथेनसूर्य्यत्वचा॥
मद्ध्वायज्ञहं समञ्जाथे ॥ तम्प्रत्क्नथायंवेनश्चित्रन्देवानाम्॥४॥
तम्प्रत्क्नथापूर्वथाविश्श्वथेमथाज्ज्येष्ठतातिम्बर्हिषदं स्वर्विदम्॥
प्रतीचीनंवृजनन्दोहसेधुनिमाशुञ्जयन्तमनुयासुवर्द्धसे॥५॥

सूर्य किरणहरूले सम्पूर्ण जगत्लाई प्रकाशित गर्नका लागि जातवेदस्रूप सूर्यदेवलाई माथि माथि लैजादैं छन्॥२॥ सबैलाई शुद्ध गर्नेवाला हे वरुणदेव! हजुरले जुन अनुग्रह दृष्टिले ती सुपर्णस्वरूपलाई हेर्नुहुन्छ तिनै चक्षुरिन्द्रियद्वारा हामी ऋत्विक्लाई पनि हेर्नुहोस् ॥३॥ हे दिव्य अश्विनीकुमारहरू हो ! हजुर दुवै सूर्यसमान कान्तियुक्त रथद्वारा हामीकहाँ आइपुग्नुहोस् र पुरोडाश दधि आदि यज्ञीय सामग्रीद्वारा यज्ञलाई अभिषिक्त गर्दै उत्कृष्ट हविवाला बनाइदिनुहोस् ॥४॥ हे इन्द्रदेव ! जुन यज्ञमा बारम्बार सोमरसपान गर्दै हजुर परिपुष्ट हुनुभएको छ । त्यस्ता हजुर उत्कृष्ट, विस्तृत र सर्वश्रेष्ठ यज्ञमा कुशासनमा रहनेवाला हुनुहुन्छ र स्वर्गको महिमालाई बुझ्नेवाला हुनुहुन्छ। शत्रुलाई थर्काइदिने र जययोग्य वस्तुलाई छिटै प्राप्त गराउने हजुरले यजमानलाई बलपूर्वक यज्ञफल प्रदान गर्नुहुन्छ । जसरी पुरातन भृगु आदि ऋषिहरू, पूर्वपितृहरू, विश्वका सम्पूर्ण प्राणीहरू र वर्तमान यजमानहरूले हजुरको स्तुति गरे त्यसरी नै हामी पनि हजुरको स्तुति गर्दछौं ॥५॥

अयंवेनश्चोदयत्पृश्निगर्भाज्ज्योतिर्जरायूरजसोविमाने॥
इमम्पाꣳसङ्गमेसूर्य्यस्यशिशुन्नविप्प्रामतिभीरिहन्ति॥६॥
चित्रन्देवानामुदगादनीकञ्चक्षुर्म्मित्रस्यवरुणस्याग्ग्नेः॥
आप्प्राद्यावापृथिवीऽअन्तरिक्षꣳ सूर्य्यऽआत्माजगतस्तस्थुषश्च॥७॥
आनऽइडाभिर्व्विदथेसुशस्तिविश्श्वानरःसवितादेवऽएतु॥
अपियथायुवानोमत्सथानोविश्श्वञ्जगदभिपित्वेमनीषा॥८॥
यदद्यकच्चवृत्रहन्नुदगाऽअभिसूर्य्य॥सर्व्वन्तदिन्द्रतेवशे॥९॥
तरणिर्व्विश्श्वदर्शतोज्ज्योतिष्कृदसिसूर्य्य॥ विश्श्वमाभासिरोचनम्॥१०॥

विद्युत्-लक्षणवाला ज्योतिले युक्त यी कान्तिमान् चन्द्रमाले ग्रीष्म ऋतुको समाप्तिसंगै जलको उत्पादनका लागि सूर्य वा द्युलोकका गर्भमा रहनेवाला जलाधिष्ठातृदेवलाई प्रेरित गर्दछन् । बुद्धिमान् ब्राह्मणहरू सूर्यको जलका साथ सङ्गति हुनेवेलामा मधुर वाणीद्वारा यी सोमदेवलाई त्यसरी नै स्तुति गर्दछन्, जसरी मानिसहरू आफ्ना बच्चाहरूलाई सुमधुर वाणीले प्रसन्न गराउँदछन् ॥६॥ अहा ! यो कस्तो आश्चर्य हो ! देवताका जीवनका आधार भएका, तेजःपुञ्जरूपी, मित्र वरुण र अग्निका आँखारूपी सूर्य उदाइरहेका छन् । स्थावरजङ्गममय जगत्का आत्मास्वरूप यी सूर्यदेवले आफ्ना तेजले पृथिवी, स्वर्ग र अन्तरिक्षलाई ढकमक्क ढाकिरहेका छन् ॥७॥ सबै जीवलाई हित गर्ने अन्तर्यामी सूर्य भगवान् हाम्रा सुन्दर आहुतिद्वारा प्रसन्न भई यस प्रशंसनीय यज्ञशालामा प्रकट होऊन् । हे निर्जर देवताहरूहो ! हजुरहरू सबै यहाँ आउँदा जसरी तृप्त हुनुहुन्छ त्यसरी नै यी सम्पूर्ण जगत्लाई पनि प्रज्ञारूप अमृतद्वारा तृप्त गराइदिनुहोला ॥८॥ वृत्रहन्ता (अन्धकारलाई नष्ट गर्ने), ऐश्वर्ययुक्त हे सूर्यदेव ! हजुर आज जहाँ उदाउनुभएको छ यी सबै ठाउँ हजुरका अधीनमा भइसकेका छन् ॥९॥ हे सूर्यदेव ! हजुर संसाररूपी समुद्रमा डुङ्गा जस्तै हुनुहुन्छ । हजुर सबैका लागि दर्शनीय हुनुहुन्छ र सबैलाई तेज प्रदान गर्नेवाला हुनुहुन्छ । प्रकाशमान सम्पूर्ण संसारलाई हजुरले नै प्रकाशित गर्नुभएको हो अर्थात् हजुरकै ज्योतिले सूर्य, चन्द्रमा, अग्नि, विद्युत्, ग्रहनक्षत्र आदि प्रकाशित भएका हुन् ॥१०॥

तत्सूर्य्यस्यदेवत्वन्तन्महित्वम्मद्ध्याकर्त्तोर्व्विततꣳ सञ्जभार॥
यदेदयुक्तहरितः सधस्थादाद्रात्रीवासस्तनुतेसिमस्मै॥११॥
तन्मित्रस्यवरुणस्याभिचक्षेसूर्य्योरूपङ्कृणुतेद्योरुपस्थे॥
अनन्तमन्यद्रुशदस्यपाजः कृष्णमन्यद्धरितꣳसम्भरन्ति॥१२॥
बण्णमहाँ२॥ऽअसिसूर्य्यबडादित्त्यमहाँ२॥ऽअसि॥
महस्तेसतोमहिमापनस्यतेद्धादेवमहाँ२॥ऽअसि॥१३॥
बट्सूर्य्यश्श्रवसामहाँ२॥ऽअसिसत्रादेवमहाँ२॥ऽअसि॥
मह्नादेवानामसुर्य्यꣳपुरोहितोविभुज्ज्योतिरदाभ्यम्॥१४॥

सूर्य भगवान्‌को जो यो महिमा हो त्यसैले विराटस्वरूप देहका मध्यभागमा सबैतिरबाट विस्तारित ग्रहमण्डललाई आफ्नो आकर्षणशक्तिद्वारा नियमित बनाउँछ । जब उहाँले आफ्ना हरितवर्णवाला किरणद्वारा आकाशलाई ढाकिदिनुहुन्छ त्यसपछि मात्रै रात्रीले आफ्ना अन्धकाररूपी वस्त्रद्वारा सबैलाई ढाक्ने काम गर्दछ ॥११॥ सूर्यदेवले स्वर्गलोकका काखमा रहेर मित्रदेव र वरुणदेवको रूप धारण गर्नुहुन्छ साथै त्यहीँबाट मनुष्यलाई राम्ररी हेर्नुहुन्छ। अर्थात् मित्रको रूपमा पुण्यात्मालाई अनुग्रहवृष्टि गर्नुहुन्छ र वरुणको रूपमा दुष्टलाई निगृहीत गर्नुहुन्छ । उनै सूर्यका अरु अनन्त स्वरूपहरू पनि छन्। वास्तवमा उहाँ नै देशकृत कालकृत वस्तुकृत परिच्छेदशून्य मायाधिष्ठाता पूर्णब्रह्म हुनुहुन्छ । उहाँका साकाररूपले इन्द्रियको वृत्ति अथवा किरणको रूप धारण गर्दछन् ॥१२॥ जगत्‌का प्रेरक सत्यस्वरूप हे सूर्यदेव ! हजुर सर्वश्रेष्ठ हुनुहुन्छ र हजुर नै महान् हुनुहुन्छ । स्तुतिकर्ताहरू हजुरको महान् र अविनाशी महिमाको गान गर्दछन् । हे प्रकाशमान् सत्यस्वरूप भगवन् ! हजुर महान् हुनुहुन्छ ॥१३॥ हे सत्यस्वरूप सूर्य ! हजुर धन र कीर्तिद्वारा महान् हुनुहुन्छ । हे सत्य स्वरूप देव ! हजुर सर्वश्रेष्ठ हुनुहुन्छ । हजुर आफ्नो महिमाद्वारा देवताको माझमा रहने, सबैलाई कल्याण गर्ने र असुरविनाशक हुनुहुन्छ। हजुर नै सबै कर्ममा अर्घ्यदानादिका माध्यमले प्रथमपूज्य हुनुहुन्छ। हजुरको ज्योति सर्वव्यापी र अनुल्लङ्घनीय छ ॥१४॥

श्रायन्तऽइवसूर्य्यंविश्श्वेदिन्द्रस्यभक्षत॥
वसूनिजातेजनमानऽओजसाप्प्रतिभागन्नदीधिम॥१५॥
अद्यादेवाऽउदितासूर्य्यस्यनिरꣳहसःपिपृतानिरवद्यात्॥
तन्नोमित्रोवरुणोमामहन्तामदितिःसिन्धुःपृथिवीऽउतद्यौः॥१६॥
आकृष्णेनरजसावर्त्तमानोनिवेशयन्नमृतम्मर्त्त्यञ्च॥
हिरण्ययेनसवितारथेनादेवोयातिभुवनानिपश्श्यन्॥१७॥

॥ ॐ नेत्रत्रयाय वौषट् ॥

॥ इति चतुर्थोऽध्यायः ॥

सूर्यका उपासक व्यक्तिले इन्द्र आदिको उपासनाबाट प्राप्त हुने धनधान्यादि ऐश्वर्य भोगलाई स्वतः प्राप्त गर्दछन्। अतः हजुर किरण सहित प्रकाशमान् भएर जब उदाउनुहुन्छ तब हामी यज्ञमा हजुरका लागि देवभाग अर्पित गर्दछौं॥१५॥ हे सूर्यरश्मिरूप देवता हो ! अब आज सूर्य उदाएपछि हजुरहरूले हामीलाई पाप र दुष्कीर्तिबाट मुक्त बनाइदिनुहोला। यस्तै मित्र, वरुण, अदिति, समुद्र, पृथिवी र स्वर्ग सबैले यो हाम्रो भनाइलाई स्वीकार गरून्॥१६॥ सबैलाई प्रेरणा दिनेवाला सूर्य भगवान् सुवर्णमय रथमा चढेर कृष्णवर्ण र रात्रिका लक्षणले युक्त भएका अन्तरिक्षका मार्गमा पुनरावर्तनका क्रमले घुमी घुमी देवता मनुष्य आदिलाई आआफ्नो कार्यक्षेत्रमा नियुक्त गर्नुहुन्छ र सम्पूर्ण लोकलाई कर्तव्यपथमा लागे–नलागेको निरीक्षण गर्दै घुमिरहनुभएको छ॥१७॥

॥ चतुर्थ अध्याय समाप्त ॥

# अथ पञ्चमोऽध्यायः

हरिः॑ ॐ नम॑स्तेरुद्द्रमन्न्यव॑ऽउ॒तोत॒ऽइष॑वे॒नमः॑ ॥
बा॒हुब्भ्या॑मु॒तते॒नमः॑ ॥१॥
याते॑रुद्द्रशि॒वात॒नूरघो॒राऽपा॑पकाशिनी ॥
तया॑नस्त॒न्न्वा॒शन्त॑मया॒गिरि॑शन्ता॒भिचा॑कशीहि ॥२॥
यामिषुं॑ङ्गिरिशन्त॒हस्तै॑बि॒भर्ष्ष्यस्त॑वे ॥
शि॒वाङ्गि॑रित्र॒ताङ्कु॑रु॒माहि॑ꣳसीः॒पुरु॑षञ्जग॑त् ॥३॥
शि॒वेन॒वच॑सात्त्वा॒गिरि॒शाच्छा॑वदामसि ॥
यथा॑नः॒सर्व॒मिज्जग॑दय॒क्ष्मꣳसु॒मना॒ऽअस॑त् ॥४॥

## पञ्चम अध्याय

रुद्रसूक्त–

दुःख नाश गराउने वा ज्ञान दिने हे रुद्रदेव ! हजुरको क्रोधलाई नमस्कार छ । हजुरको बाणलाई र हजुरका दुवै हातहरूलाई पनि नमस्कार छ ॥१॥ कैलाशपर्वतमा विराजमान अथवा वाणीमा या मेघमा रहेर सबैलाई आनन्द दिने हे रुद्रदेव ! घोर र अघोर गरी हजुरका दुई रूप छन् । ती दुई मध्ये जुन कल्याणकारी, पापनाशक र सौम्य अघोररूप छ त्यो सुखदायक मङ्गलमयरूप धारण गरेर हामीलाई दर्शन दिनुहोस् र हाम्रो रक्षा गर्नुहोस् ॥२॥ पर्वतको शिखरमा निवास गर्ने हे रुद्रदेव ! हजुर वेदवाणीमा पनि रहनुहुन्छ र सबैको रक्षा गर्नुहुन्छ अथवा वृष्टिको रूपले सबैको पालन गर्नुहुन्छ । हजुरले संसारको प्रलय गर्दा आफ्नो हातमा जुन बाण लिनुहुन्छ त्यस बाणलाई लोककल्याणका निमित्त प्रयोग गरिदिनुहोस् । हाम्रा स्त्रीपुत्रादि परिवारजन र सम्पूर्ण पशुपक्षीआदि प्राणीमाथि प्रयोग नगरिदिनुहोस् ॥३॥ कैलाशमा शयन गर्ने हे शिव ! हामीहरू हजुरलाई प्राप्त गर्नका लागि कल्याणमय वाणीद्वारा हजुरको स्तुति गर्दछौं । हामी संसारका सम्पूर्ण प्राणीहरूलाई निरोगी र सद्विचारवाला बनाइदिनुहोस् ॥४॥

अध्यवोचदधिवक्ताप्प्रथमोदैब्योभिषक्॥
अहीँश्च्चसर्वाञ्जम्भयन्सर्वाँश्च्चयातुधान्योधराचीःपरासुव॥५॥
असौयस्ताम्म्रोऽअरुणऽउतबभ्भ्रुःसुमङ्गलः॥
येचैनᳪरुद्द्राऽअभितोदिक्षुश्रिताःसहस्रशोवैषाᳪहेडऽईमहे॥६॥
असौयोवसर्प्पतिनीलग्ग्रीवोविलोहितः॥
उतैनङ्गोपाऽअदृश्श्रन्नदृश्श्रन्नुदहार्य्यः सदृष्टोमृडयातिनः॥७॥
नमोस्तुनीलग्ग्रीवायसहस्राक्षायमीढुषे॥
अथोयेऽअस्यसत्त्वानोहन्तेब्भ्योकरन्नमः॥८॥
प्प्रमुञ्चधन्न्वनस्त्वमुभयोरात्र्न्योज्ज्याम्॥
याश्च्चतेहस्तऽइषवःपराताभगवोवप॥९॥

मुख्य वक्ताका रूपमा रहने, देवताहरूमा प्रमुख र रोगनाशक रुद्रदेवले हामीहरूलाई विशेषरूपले वर्णन गरून् साथै सर्प व्याघ्रादि हिंस्रक प्राणीलाई नष्ट गर्दै अधोगमन गराउने सम्पूर्ण राक्षसीहरूलाई पनि हामीबाट टाढा भगाइदिनुहोस् ॥५॥ जुन रुद्रदेव सूर्यरूपमा सबैका सामु प्रत्यक्ष हुनुहुन्छ। जो उदाउँदा रातो, अस्ताउँदा अरुण र मध्याह्न कालमा पिङ्गल वर्णभएका मङ्गलदायी हुनुहुन्छ। जसका वरिपरि हजारौं रुद्रांशरूप किरणहरू व्याप्त छन्। त्यस्ता रुद्र भगवान्को क्रोधलाई हामीले आफ्नो श्रद्धापूर्ण साधनाबाट निराकरण गरौँ ॥६॥ जुन भगवान् कर्मसाक्षी भई नित्य उदाउने र अस्ताउने गर्नुहुन्छ त्यस्ता नीलकण्ठ र कहिलेकाहीँ लालिमाले युक्त हुने सूर्यरूप रुद्र भगवान्लाई सामान्य अज्ञानी गोठाला, खेताला र पधेँनीहरूले समेत प्रत्यक्ष रूपमा दर्शन गर्दछन्। त्यस्ता रविमण्डलमा अवस्थित रुद्रदेवले हामीलाई सुखी बनाऊन् ॥७॥ हजारौं नेत्रद्वारा जगत्लाई हेर्ने र कृपादृष्टि छर्ने नीलकण्ठ भगवान्लाई नमस्कार छ। त्यस्तै जुन उहाँका सत्त्वगुणी अनुचरहरू छन्, तिनीहरूलाई पनि म नमस्कार गर्दछु ॥८॥ हे भगवन् ! हजुरका धनुषका दुवै टुप्पामा बाँधिएको ताँदो (डोरी)लाई खोलिदिनुहोस्, हजुरका हातमा रहेका बाणलाई पनि टाढै हटाइदिनुहोस् र हजुर हाम्रा लागि कल्याणकारी भइदिनुहोस् ॥९॥

विज्ज्यन्धनुः कपर्द्दिनोविशल्ल्योबाणवाँ२ ॥उत॥
अनैशन्नस्यषाऽइषवऽआभुरस्यनिषङ्गधिः॥१०॥
याते हेतिर्म्मीढुष्टमहस्तेबभूवतेधनुः॥
तयास्मान्विश्श्वतस्त्वमयक्ष्मयापरिभुज॥११॥
परितेधन्वनोहेतिरस्मान्वृणक्तुविश्श्वतः॥
अथोयऽइषुधिस्तवारेऽअस्म्मन्निधेहितम्॥१२॥
अवतत्त्यधनुष्ट्व ᳪ सहस्त्राक्षशतेषुधे॥
निशीर्य्यशल्ल्यानाम्मुखाशिवोनःसुमनाभव॥१३॥
नमस्तऽआयुधायानाततायधृष्ष्णवे॥
उभाब्भ्यामुततेनमोबाहुब्भ्यान्तवधन्वने॥१४॥

जटाजूटधारी शिवजीको धनु ताँदोरहित हओस्। ठोक्रो विषालु बाणले रहित हओस्। यी रुद्रदेवका बाणहरू कहीँ कतै नदेखिऊन् र यिनको म्यान (खड्ग राख्ने ठाउँ) पनि खाली हओस्। अर्थात् भगवान् रुद्र हाम्रा लागि निःशस्त्र भइदिनुहोस् ॥१०॥ अमृत वर्षाउने हे भगवन्! हजुरका हातमा जे जति हतियार वा धनुष छन् ती उपद्रवरहित हऊन् र हजुरले त्यस्ता उपद्रवरहित हतियारहरूद्वारा हामीलाई चारैतिरबाट रक्षा गर्दै पालन गर्नुहोस् ॥११॥ हे रुद्रदेव! हजुरका धनुर्बाणले सबैतिरबाट हामीलाई रक्षा गरून् तर हजुरको बाण राख्ने जुन ठोक्रो छ त्यसलाई हामीभन्दा टाढै राखिदिनुहोस् ॥१२॥ हजारौं नेत्रले संसारलाई देख्न सक्ने हे भगवन्! हजुरका तरकस (बाण राख्ने ठोक्रा) पनि सैकडौं छन् तर हजुरले आफ्नो धनुलाई ताँदो रहित बनाउनुहोस्। बाणको अग्रभागलाई बोधो बनाउनुहोस् र हामी उपर प्रसन्न एवं कल्याणकारी हुनुहोस् ॥१३॥ हे रुद्रदेव! हजुरका शत्रुनाश गर्न समर्थ तर नखोलिएका हतियारलाई नमस्कार छ। हजुरका दुवै बाहुलाई नमस्कार छ र यस्तै हजुरको विजयशाली धनुषलाई पनि नमस्कार छ ॥१४॥

मानोमहान्तमुतमानोऽअर्ब्भकम्मानऽउक्षन्तमुतमानऽउक्षितम् ॥
मानोव्वधीःपितरम्मोतमातरम्मानः प्प्रियास्तन्न्वोरुद्द्ररीरिषः ॥१५॥
मानस्तोकेतनयेमानऽआयुषिमानोगोषुमानोऽअश्श्वेषुरीरिषः ॥
मानोव्वीरान्रुद्द्रभामिनोव्वधीर्हविष्मन्तःसदमित्त्वाहवामहे ॥१६॥

॥ ॐ अस्त्राय फट् ॥

(प्रथमावृत्तौ पुनर्नमस्ते षोडशकं जप्त्वा)

नमोहिरण्ण्यबाहवेसेनान्न्येदिशाञ्चपतयेनमोनमोव्वृक्षेब्भ्योहरिकेशे
ब्भ्यःपशूनाम्पतयेनमोनमःशष्प्पिञ्जरायत्त्विषीमतेपथीनाम्पतयेनमो
नमोहरिकेशायोपवीतिनेपुष्ट्टानाम्पतयेनमोनमोबब्भ्लुशाय ॥१७॥

---

हे रुद्रदेव ! हजुरले हाम्रा महनीय वृद्ध गुरुजनहरूलाई नष्ट नगर्नुहोस् । त्यस्तै आमाका गर्भमा रहेका शिशुहरूलाई, बालकहरूलाई, तन्नेरी नौजवानहरूलाई पनि नमारिदिनुहोस् । यसैगरी हाम्रा पिता, माता र प्यारा पुत्रपौत्रादि परिवारलाई पनि नमारिदिनुहोस् ॥१५॥ हे रुद्र ! हाम्रा पुत्रपौत्रादि सन्ततिलाई नमार्नुहोस् । हाम्रो आयु नष्ट नगर्नुहोस् । हाम्रा गाई आदि पशुमा र घोडा आदि वाहनमा प्रहार नगर्नुहोस् । त्यस्तै हाम्रा रिसाहा सैनिकहरूको वध नगरिदिनुहोस् । हामीहरू हवि वा पूजासमग्री सहित भएर सँधै हजुरको आवाहन गर्दछौं ॥१६॥ आफ्ना बाहुमा सुवर्ण धारण गर्ने, सेनानायक र दिशाका अधिपति रुद्रदेवलाई नमस्कार छ । पूर्णरूपमा हरियो केशवाला, वृक्षरूप र जीवहरूलाई पालन गर्ने रुद्रदेवलाई नमस्कार छ । कान्तिमान् बालतृण जस्ता पहेलो वर्ण भएका मार्गहरूका पालक रुद्रदेवलाई नमस्कार छ । नीलवर्णवाला केश भएका र मङ्गलका निमित्त यज्ञोपवीत धारण गर्नेवाला एवं सद्गुणहरूले युक्त मनुष्यका मालिक रुद्रदेवलाई नमस्कार छ ॥१७॥

नमौबब्भ्लुशायव्याधिनेन्न्नानाम्पतयेनमोनमौभुवस्यहेत्त्यैजगता
म्पतयेनमोनमौरुद्द्रायाततायिनेक्षेत्राणाम्पतयेनमोनमः सूतायाहन्त्यै
व्वनानाम्पतयेनमोनमोरोहिताय॥१८॥
नमोरोहितायस्त्थपतयेव्वृक्षाणाम्पतयेनमोनमौभुवन्तयेव्वारिवस्कृता
यौषधीनाम्पतयेनमोनमौमन्त्रिणेव्वाणिजायकक्षाणाम्पतयेनमोनमऽ
उच्चैर्ग्घोषायाक्क्रन्दयतेपत्तीनाम्पतयेनमोनमः कृत्स्नायतया॥१९॥
नमः कृत्स्नायतयाधावतेसत्त्वानाम्पतयेनमोनमः सहमानायनिव्या
धिनऽआव्याधिनीनाम्पतयेनमोनमौनिषङ्गिणेककुभायस्तेनानाम्पतये
नमोनमौनिचेरवेपरिचरायारण्ण्यानाम्पतयेनमौनमोवञ्चते॥२०॥

कैलो वर्ण भएका अथवा कपिल वर्णयुक्त वृषभमा आरूढ हुने, शत्रुहरूलाई वेधन गर्ने र अन्नका पालक रुद्रदेवलाई नमस्कार छ । संसारका आयुधरूप भएका तथा जगत्को पालन गर्ने र हतियार उठाउनेवाला रुद्रदेवलाई नमस्कार छ । देहहरूको पालन गर्ने, नमार्नेवाला, सारथिरूप र वनका रक्षक रुद्रदेवलाई नमस्कार छ ॥१८॥ लोहित वर्ण भएका, गृह आदिको निर्माण गर्ने विश्वकर्मा रूप लिने र वृक्षका पालक रुद्रदेवलाई नमस्कार छ । भुवनलाई विस्तार गर्ने, समृद्धि गराउने र औषधिहरूका रक्षक रुद्रदेवलाई नमस्कार छ । समालोचनामा कुशल, व्यापारकर्तारूप र वनका लतावृक्ष आदिको पालन गर्नेवाला रुद्रदेवलाई नमस्कार छ । युद्धमा डरलाग्दो शब्द गर्ने, शत्रुहरूलाई रुवाउने र अश्वादि विविध सेनाहरूको पालन गर्नेवाला रुद्रदेवलाई नमस्कार छ ॥१९॥ कानसम्म धनु खिंचेर अत्यन्तै छिटो युद्धमा दौडिने, सम्पूर्ण लाभ गराउने रुद्रदेवलाई नमस्कार छ । शरणागत प्राणीहरूको पालन गर्ने रुद्रदेवलाई नमस्कार छ । शत्रुलाई तिरस्कार गर्नेवाला र शत्रुलाई वेधन गर्नेवाला रुद्रदेवलाई नमस्कार छ । सबै प्रकारले प्रहार गर्न सक्ने सूरा र सेनाका रक्षक रुद्रदेवलाई नमस्कार छ । खड्ग चलाउनेवाला महान् रुद्रदेवलाई नमस्कार छ । गुप्त चोरहरूका रक्षक रुद्रदेवलाई नमस्कार छ । निरन्तर गतिशील र हरण गर्ने इच्छाले आपण आदिमा विचरण गर्नेवाला रुद्रदेवलाई नमस्कार छ र वनका रक्षक रुद्रदेवलाई नमस्कार छ ॥ २०॥

नमो वञ्चते परिवञ्चते स्तायूनाम्पतये नमो नमो निषङ्गिण ऽइषुधिमते
तस्कराणाम्पतये नमो नमः सृकायिभ्यो जिघाꣳसद्भ्यो मुष्णता
म्पतये नमो नमो ऽसिमद्भ्यो नक्तञ्चरद्भ्यो विकृन्तानाम्पतये नमः ॥२१॥
नम ऽउष्णीषिणे गिरिचराय कुलुञ्चानाम्पतये नमो नम ऽइषुमद्भ्यो
धन्वायिभ्यश्च वो नमो नम ऽआतन्वानेभ्यः प्रतिदधानेभ्य
श्च वो नमो नम ऽआयच्छद्भ्योऽस्यद्भ्यश्च वो नमो नमो विसृजद्भ्यः ॥२२॥
नमो विसृजद्भ्यो विध्यद्भ्यश्च वो नमो नमः स्वपद्भ्यो जाग्रद्भ्य
श्च वो नमो नमः शयानेभ्य ऽआसीनेभ्यश्च वो नमो नमस्तिष्ठद्भ्यो
धावद्भ्यश्च वो नमो नमः सभाभ्यः ॥२३॥

वञ्चना गर्नेवाला र आफ्ना मालिकलाई विश्वास दिलाएर धन हरण गर्ने व्यक्तिलाई समेत ठग्नेवाला रुद्ररूप भगवान्‌लाई नमस्कार छ । गुप्तधन चोर्नेवालाका पालक रुद्रदेवलाई नमस्कार छ । बाण र ठोक्रो धारण गर्नेवाला रुद्रदेवलाई नमस्कार छ । खुलेर चोरी गर्नेवालालाई रक्षा गर्ने रुद्रदेवलाई नमस्कार छ । वज्रधारण गर्ने र शत्रुको संहार गर्ने इच्छा राख्नेवाला रुद्रदेवलाई नमस्कार छ । खेतमा पैदा हुने धान आदि वनौषधि लैजानेवालालाई रक्षा गर्ने रुद्रदेवलाई नमस्कार छ । प्राणीहरूलाई घात गर्न वा रक्षा गर्न खड्‌गधारण गरेर रात्रिमा विचरण गर्ने रुद्रदेवलाई नमस्कार छ । अरुलाई कृन्तन गरेर उनीहरूको धन हरण गर्नेवालालाई पनि पालन गर्ने रुद्रदेवलाई नमस्कार छ ॥२१॥ शिरमा फेटा गुतेर पर्वत आदि दुर्गम स्थलमा घुम्नेवाला रुद्रदेवलाई नमस्कार छ । छलपूर्वक अरुका खेत, घर आदि हरण गर्नेवालालाई पालन गर्ने रुद्रदेवलाई नमस्कार छ । मानिसहरूलाई भयभीत गर्न बाण धारण गर्ने र धनुष धारण गर्ने रुद्रदेवहरूलाई नमस्कार छ । धनुमा ताँदो चढाउनेवाला रुद्रदेवलाई र धनुमा बाण सन्धान गर्नेवाला रुद्रदेवलाई नमस्कार छ । धनुलाई राम्ररी खिच्नेवाला र बाणलाई राम्ररी प्रहार गर्नेवाला रुद्रदेवलाई नमस्कार छ ॥२२॥ पापीहरूलाई दमन गर्न बाण चलाउनेवाला रुद्रदेवलाई नमस्कार छ । शत्रुहरूलाई वेधन गर्नेवाला रुद्रदेवलाई नमस्कार छ । स्वप्नावस्थाको अनुभव गर्नेवाला, जाग्रत् अवस्थावाला र सुषुप्ति अवस्थावाला रुद्रदेवलाई नमस्कार छ । बस्दै गरेका, स्थिर रहेका र वेगवान् तीव्र गतिवाला रुद्रदेवलाई नमस्कार छ ॥२३॥

**नमः सभाब्भ्यः सभापतिब्भ्यश्च वो नमो नमो ऽश्वेब्भ्यो ऽश्वपति ब्भ्यश्च वो नमो नम ऽआव्याधिनीब्भ्यो विविद्धयन्तीब्भ्यश्च वो नमो-नम ऽउगणाब्भ्यस्तृꣳहतीब्भ्यश्च वो नमो नमो गणेब्भ्यः ॥२४॥**

**नमो गणेब्भ्यो गणपतिब्भ्यश्च वो नमो नमो व्रातेब्भ्यो व्रातपति ब्भ्यश्च वो नमो नमो गृत्सेब्भ्यो गृत्सपतिब्भ्यश्च वो नमो नमो विरूपे ब्भ्यो विश्वरूपेब्भ्यश्च वो नमो नमः सेनाब्भ्यः ॥२५॥**

**नमः सेनाब्भ्यः सेनानिब्भ्यश्च वो नमो नमो रथिब्भ्यो ऽअरथेब्भ्य श्च वो नमो नमः क्षत्तृब्भ्यः सङ्ग्रहीतृब्भ्यश्च वो नमो नमो महद्भ्यो ऽ अर्भकेब्भ्यश्च वो नमः ॥२६॥**

सभारूप र सभापतिरूप रुद्रदेवलाई नमस्कार छ । अश्वरूप र अश्वका अधिपतिको रूपमा रहेका रुद्रदेवलाई नमस्कार छ । सबै प्रकारले वेधन गर्नेवाला देवसेनारूप रुद्रदेवलाई र विशेष रूपले वेधन गर्नेवाला देवसेनारूप रुद्रदेवलाई नमस्कार छ । उत्कृष्ट भृत्यहरूको समूहवाला ब्राह्मी आदि मातृस्वरूप रुद्रदेवलाई नमस्कार छ । हनन गर्न समर्थ दुर्गा आदि मातृस्वरूप रुद्रदेवलाई नमस्कार छ ॥ २४॥ देवताहरूका अनुचर भूतगणरूप रुद्रदेवलाई नमस्कार छ । भूतगणका मालिक भएका रुद्रदेवलाई नमस्कार छ । भिन्न भिन्न जाति समूहरूप रुद्रदेवलाई र विभिन्न जाति समूहका अधिपतिरूप रुद्रदेवलाई नमस्कार छ । मेधावी ब्रह्मजिज्ञासु बनेका रुद्रदेवलाई र यस्ता जिज्ञासुका अधिपति भएका रुद्रदेवलाई नमस्कार छ । निकृष्ट रूपवाला रुद्रदेवलाई र नानारूप भएका विश्वरूपी रुद्रदेवलाई नमस्कार छ ॥२५॥ सेनारूप रुद्रलाई र सेनापतिरूप रुद्रदेवलाई नमस्कार छ । रथमा चढ्नेवाला र रथविहीन रुद्रदेवलाई नमस्कार छ । रथका अधिष्ठातारूप रुद्रदेवलाई नमस्कार छ र सारथिरूप रुद्रदेवलाई नमस्कार छ । जाति तथा विद्या आदिले उत्कृष्ट प्राणीको रूपमा रहेका रुद्रदेवलाई नमस्कार छ । प्रमाण आदिले न्यून बालकको रूपमा रहेका रुद्रदेवलाई नमस्कार छ ॥२६॥

नमस्तक्षभ्योरथकारेभ्यश्चवोनमोनमः कुलालेभ्यः कर्म्मारिभ्यश्चवोनमोनमोनिषादेभ्यः पुञ्जिष्ठेभ्यश्चवोनमोनमः श्वनिभ्योमृगयुभ्यश्चवोनमोनमः श्वभ्यः ॥२७॥
नमः श्वभ्यः श्वपतिभ्यश्चवोनमोनमोभवायचरुद्रायचनमः शर्वायचपशुपतयेचनमोनीलग्रीवायचशितिकण्ठायचनमः कपर्द्दिने ॥२८॥
नमः कपर्द्दिनेचव्युप्तकेशायचनमः सहस्राक्षायचशतधन्वनेचनमोगिरिशयायचशिपिविष्टायचनमोमीढुष्टमायचेषुमतेचनमोह्रस्वाय ॥२९॥
नमोह्रस्वायचवामनायचनमोबृहतेचवर्षीयसेचनमोवृद्धायचसवृधेचनमोऽग्र्यायचप्रथमायचनमऽआशवे ॥३०॥

शिल्पकाररूप रुद्रदेवलाई नमस्कार छ। रथको निर्माण गर्नेवाला रुद्रदेवलाई नमस्कार छ। कुम्भकाररूप रुद्रदेवलाई र लौहकाररूप रुद्रदेवलाई नमस्कार छ। वन पर्वत आदिमा घुम्ने निषादरूप रुद्रदेवलाई र पक्षीहरूलाई मार्ने पुल्कश आदि रूप रुद्रदेवलाई नमस्कार छ। कुक्कुरहरूको गलामा बाँधिएको डोरी धारण गर्ने रुद्रदेवलाई नमस्कार छ र मृगहरूको कामना गर्नेवाला व्याधारूप रुद्रदेवलाई नमस्कार छ ॥२७॥ कुक्कुरहरूको रूपमा विचरण गर्ने रुद्रदेवलाई नमस्कार छ। कुक्कुरका मालिकको रूपमा रहेका रुद्रदेवलाई नमस्कार छ। प्राणीहरूको उत्पत्ति गराउने रुद्रदेवलाई नमस्कार छ। दुःखका विनाशक र पापलाई नाश गर्नेवाला रुद्रदेवलाई नमस्कार छ। पशुहरूका रक्षक रुद्रदेवलाई नमस्कार छ। हलाहल विष पिउँदा घाँटीमा नीलो वर्ण भएका र सेतो गलावाला रुद्रदेवलाई नमस्कार छ ॥ २८॥ जटाजुट धारण गर्नेवाला रुद्रलाई नमस्कार छ। केश मुण्डन गरेका रुद्रदेवलाई नमस्कार छ। हजारौं आँखा भएका इन्द्ररूप रुद्रदेवलाई नमस्कार छ। सयौं धनुष धारण गर्नेवाला रुद्रदेवलाई नमस्कार छ। कैलाशपर्वतमा शयन गर्नेवाला रुद्रदेवलाई नमस्कार छ। सबै प्राणीका हृदयभित्र अन्तर्यामीको रूपमा रहने विष्णुरूप रुद्रदेवलाई नमस्कार छ। ज्यादै सेचन गर्नेवाला मेघरूप रुद्रदेवलाई नमस्कार छ। बाण धारण गर्नेवाला रुद्रदेवलाई पनि नमस्कार छ ॥२९॥ सानो शरीर भएका र पुड्के शरीर भएका रुद्रदेवलाई नमस्कार छ। ठूलो शरीर भएका रुद्रदेवलाई नमस्कार छ। अत्यन्तै वृद्धावस्था भएका रुद्रदेवलाई नमस्कार छ। धेरै आयु भएका रुद्रदेवलाई नमस्कार छ। विद्या र विनयादि गुणले सम्पन्न विद्वान्हरूका साथी भएका रुद्रदेवलाई नमस्कार छ। जगत्का आदिभूत रुद्रदेवलाई नमस्कार छ र सर्वत्र मुख्य रूपमा विराजमान रुद्रदेवलाई नमस्कार छ ॥३०॥

नमऽआशवेचाजिरायचनमःशीग्घ्यायचशीभ्भ्यायचनमऽऊर्म्म्यां
यचावस्वन्न्यायचनमोनादेयायचद्द्वीप्प्यायचनमोज्ज्येष्ठाय॥३१॥
नमोज्ज्येष्ठायचकनिष्ठायचनमः पूर्व्वजायचापरजायचनमोमद्ध्यमाय
चापगल्भायचनमोजघन्न्यायचबुध्न्यायचनमःसोभ्भ्याय॥३२॥
नमःसोभ्भ्यायचप्रतिसर्य्यायचनमोयाम्म्यायचक्षेम्म्यायचनमश्श्लोक्क्या
यचावसान्न्यायचनमऽउर्व्वर्य्यायचखल्ल्यायचनमोवन्न्याय॥३३॥
नमोवन्न्यायचकक्क्ष्यायचनमः श्श्रवायचप्प्रतिश्श्रवायचनमऽआशुषे
णायचाशुरथायचनमःशूरायचावभेदिनेचनमोबिल्मिने॥३४॥

जगद्व्यापी रुद्रदेवलाई नमस्कार छ। गतिशील रुद्रदेवलाई नमस्कार छ। वेगवान् वस्तुहरूमा रहने रुद्रदेवलाई नमस्कार छ। जलप्रवाहमा विद्यमान आत्मश्लाघी रुद्रदेवलाई नमस्कार छ। जलतरङ्गहरूमा व्याप्त र स्थिर जलरूप रुद्रदेवलाई नमस्कार छ। नदीहरूमा र द्वीपहरूमा व्याप्त रुद्रदेवलाई नमस्कार छ ॥३१॥ अत्यन्तै श्रेष्ठ ज्येष्ठरूप रुद्रदेवलाई नमस्कार छ। अत्यन्त युवा अथवा कान्छो रुद्रदेवलाई नमस्कार छ। जगत्का आदिमा हिरण्यगर्भको रूपमा प्रकट हुने रुद्रदेवलाई नमस्कार छ। प्रलयका समयमा कालाग्नि जस्तै रूप धारण गर्नेवाला रुद्रदेवलाई नमस्कार छ। सृष्टि र प्रलयको मध्यमा देवता, मनुष्य र पशुपक्षी आदिको रूपमा उत्पन्न हुनेवाला रुद्रदेवलाई नमस्कार छ। अप्रकट इन्द्रिय भएका रुद्रदेवलाई नमस्कार छ। अथवा विनीत रुद्रदेवलाई नमस्कार छ। गाई आदिका जघनप्रदेशबाट उत्पन्न हुने रुद्रदेवलाई नमस्कार छ र वृक्ष आदिका फेदमा निवास गर्नेवाला रुद्रदेवलाई नमस्कार छ ॥३२॥ पुण्यपापले युक्त भएका मनुष्यलोकमा उत्पन्न हुनेवाला रुद्रदेवलाई नमस्कार छ। मङ्गलकार्यमा कल्याणरूप भई रहने रुद्रदेवलाई नमस्कार छ। पापीहरूलाई नारकी वेदना दिने यमराजका पनि अन्तर्यामी रुद्रदेवलाई नमस्कार छ। कुशलकर्ममा रहनेवाला रुद्रदेवलाई नमस्कार छ। वेदका मन्त्रद्वारा प्रकट हुने रुद्रदेवलाई नमस्कार छ। वेदान्तको तात्पर्यविषयीभूत रुद्रदेवलाई नमस्कार छ। सर्वसस्यश्यामला पृथिवीबाट उत्पन्न हुनेवाला धान्य आदि रूप रुद्रदेवलाई नमस्कार छ। धान्यविवेचनस्थल (खलो) मा उत्पन्न हुने रुद्रदेवलाई नमस्कार छ ॥३३॥ शिरस्त्र र कवच, किरीट, कुण्डल आदि धारण गर्ने रुद्रदेवलाई नमस्कार छ। कपास निर्मित देहरक्षक धारण गर्ने रुद्रदेवलाई नमस्कार छ। फलामको बख्तर पहिरिने रुद्रदेवलाई नमस्कार छ। गुम्बदयुक्त भएका रथमा विराजमान रुद्रदेवलाई नमस्कार छ। संसारमा प्रसिद्ध रुद्रदेवलाई नमस्कार छ। प्रसिद्ध

नमौबिल्मिनेचकवचिनेचनमोवर्म्मिणेचवरूथिनेचनमः श्श्रुतायचश्श्रुत
सेनायचनमौदुन्दुब्भ्यायचाहनन्न्यायचनमोधृष्ष्णवे॥ ३५॥
नमोधृष्ष्णवेचप्प्रमृशायचनमोनिषङ्गिणेचेषुधिमतेचनमस्तीक्ष्णेषवेचा
युधिनेचनमः स्वायुधायचसुधन्न्वनेचनमःस्स्रुत्याय॥ ३६॥
नमःस्स्रुत्यायचपथ्यायचनमःकाट्ट्यायचनीप्प्यायचनमःकुल्ल्यायच
सरस्स्यायचनमोनादेयायचवैशन्तायचनमःकूप्प्याय॥ ३७॥
नमःकूप्प्यायचावट्ट्यायचनमोवीद्ध्र्यायचातप्प्यायचनमोमेग्घ्याय
चविद्द्युत्यायचनमोवर्ष्ष्यायचावर्ष्ष्यायचनमोवात्त्याय॥ ३८॥

सेनाले युक्त भएका रुद्रदेवलाई नमस्कार छ। दुन्दुभिमा अवस्थित रुद्रदेवलाई नमस्कार छ। भेरी आदि वाद्य वादन गर्न प्रयोग हुने दण्ड आदि साधनमा विद्यमान रुद्रदेवलाई नमस्कार छ॥३४-३५॥ प्रगल्भस्वभाववाला रुद्रदेवलाई नमस्कार छ। सत् असत्लाई विवेक गर्न सिपालु रुद्रदेवलाई नमस्कार छ। खड्ग धारण गर्ने रुद्रदेवलाई नमस्कार छ। ठोक्रो धारण गर्ने रुद्रदेवलाई नमस्कार छ। तीखा बाणधारण गर्ने रुद्रदेवलाई नमस्कार छ। विविध प्रकारका हतियारहरू धारण गर्ने रुद्रदेवलाई नमस्कार छ। उत्तम त्रिशूलरूप हतियार लिने र श्रेष्ठ पिनाकधनुषले युक्त भएका रुद्रदेवलाई नमस्कार छ॥३६॥ गाउँघरका सामान्य बाटामा रहने रुद्रदेवलाई नमस्कार छ। हात्ती, घोडा, रथ आदि हिँडाउन मिल्ने विस्तृत मार्गमा रहने रुद्रदेवलाई नमस्कार छ। दुर्गम मार्गहरूमा रहने रुद्रदेवलाई नमस्कार छ। झरनाहरू झर्ने भूप्रदेशमा अथवा पर्वतको अधोभागमा विद्यमान रुद्रदेवलाई नमस्कार छ। नहरको मार्गमा अवस्थित अथवा शरीरहरूमा अन्तर्यामी रूपले विराजमान रुद्रदेवलाई नमस्कार छ। तलाउहरूमा उत्पन्न हुने रुद्रदेवलाई नमस्कार छ। पवित्र नदीका जलमा रहनुहुने रुद्रदेवलाई नमस्कार छ। सानातिना कुवा, खोल्साहरूमा समेत रहने रुद्रदेवलाई नमस्कार छ॥३७॥ पानीका कुवाहरूमा विद्यमान रुद्रदेवलाई नमस्कार छ। खाल्डो आदि गहिरा स्थानमा विद्यमान रुद्रदेवलाई नमस्कार छ। शरद् ऋतुको मेघ अथवा चन्द्रनक्षत्रादि मण्डलमा विद्यमान विशुद्ध स्वभाववाला रुद्रदेवलाई नमस्कार छ। प्रचण्ड गर्मीमा उत्पन्न हुने रुद्रदेवलाई नमस्कार छ। मेघहरूमा रहने रुद्रदेवलाई नमस्कार छ। विद्युत्मा प्रकाशित हुने तेजःपुञ्ज रुद्रदेवलाई नमस्कार छ। वर्षामा विद्यमान रुद्रदेवलाई नमस्कार छ र अनावृष्टिमा अवस्थित रुद्रदेवलाई नमस्कार छ॥३८॥

नमोवात्त्यायचरेष्म्म्यायचनमौवास्तव्व्यायचवास्तुपायचनमः
सोमायचरुद्द्रायचनमस्ताम्म्रायचारुणायचनमः शङ्गवे॥३९॥
नमः शङ्गवेचपशुपतयेचनमऽउग्ग्रायचभीमायचनमोग्ग्रेवधायचदूरेव
धायचनमोहन्त्रेचहनीयसेचनमौवृक्षेब्भ्योहरिकेशेब्भ्योनमस्तारायः॥४०॥
नमः शम्भवायचमयोभवायचनमः शङ्करायचमयस्करायचनमः
शिवायचशिवतरायच॥४१॥

वायुमा व्याप्त रुद्रदेवलाई नमस्कार छ । प्रलयकालमा पनि स्थिर रहने रुद्रदेवलाई नमस्कार छ । घर घडेरीहरूमा रहनुभएका रुद्रदेवलाई नमस्कार छ । अथवा सर्वशरीरवासी रुद्रदेवलाई नमस्कार छ । गृहभूमिका संरक्षकरूप रुद्रदेवलाई नमस्कार छ । चन्द्रमामा रहने अथवा ब्रह्मविद्या भगवती उमाले सुशोभित सदाशिव रुद्रदेवलाई नमस्कार छ । सबै प्रकारका अनिष्टको विनाश गर्ने रुद्रदेवलाई नमस्कार छ । उदीयमान सूर्यका रश्मि जस्ता ताम्रवर्णले युक्त रुद्रदेवलाई नमस्कार छ र उदयपछि सूर्यको वर्णजस्तो वर्णले युक्त भएका रुद्रदेवलाई नमस्कार छ ॥३९॥ आफ्ना सम्पूर्ण भक्तलाई सुखप्रदान गर्ने रुद्रदेवलाई नमस्कार छ । जीवहरूका मालिकस्वरूप रुद्रदेवलाई नमस्कार छ । जगत्‌को संहार गर्ने वेलामा प्रचण्डरूप धारण गर्ने रुद्रदेवलाई नमस्कार छ । आफ्नो भयानक स्वरूपले शत्रुहरूलाई भयभीत पार्ने रुद्रदेवलाई नमस्कार छ । आफैं खडा भएर शत्रुहरूको विनाश गर्ने रुद्रदेवलाई नमस्कार छ । टाढा रहेर पनि संहार गर्ने रुद्रदेवलाई नमस्कार छ । सम्पूर्ण दुष्कार्यहरूलाई नाश गर्ने रुद्रदेवलाई नमस्कार छ । प्रलयकालमा सर्वहन्तारूप रुद्रदेवलाई नमस्कार छ । हरिया पातजस्ता केशले युक्त कल्पवृक्ष जस्ता रुद्रदेवलाई नमस्कार छ र ज्ञानोपदेशद्वारा मुमुक्षुजनलाई संसारबाट तार्ने रुद्रदेवलाई नमस्कार छ ॥४०॥ सुखका उद्गमस्थान भएका रुद्रदेवलाई नमस्कार छ । भोग र मोक्षको सुख दिनेवाला रुद्रदेवलाई नमस्कार छ । लौकिक सुख दिनेवाला रुद्रदेवलाई नमस्कार छ । वेदान्तप्रतिपाद्य ब्रह्मात्मैक्य साक्षात्काररूप रुद्रदेवलाई नमस्कार छ । कल्याणरूप निष्पाप रुद्रदेवलाई नमस्कार छ । आफू र आफ्ना भक्तलाई पनि पापरहित बनाई कल्याण गर्ने रुद्रदेवलाई नमस्कार छ ॥४१॥

नमः॒ पार्या॑य चावा॒र्या॑य च॒ नमः॑ प्रत॒रणा॑य चोत्त॒रणा॑य च॒ नम॒स्तीर्थ्या॑य च॒ कूल्या॑य च॒ नमः॒ शष्प्या॑य च॒ फेन्या॑य च॒ नमः॑ सिक॒त्या॑य ॥४२॥
नमः॑ सिक॒त्या॑य च प्रवा॒ह्या॑य च॒ नमः॑ किꣳशि॒लाय॑ च क्षय॒णाय॑ च॒ नमः॑ कप॒र्दिने॑ च पुल॒स्तये॑ च॒ नम॑ इरि॒ण्या॑य च प्रप॒थ्या॑य च॒ नमो॑ व्रज्या॑य ॥४३॥
नमो॑ व्रज्या॑य च॒ गोष्ठ्या॑य च॒ नम॒स्तल्प्या॑य च॒ गेह्या॑य च॒ नमो॑ हृद॒य्या॑य च निवे॒ष्प्या॑य च॒ नमः॒ काट्या॑य च गह्वरे॒ष्ठाय॑ च॒ नमः॒ शुष्क्या॑य ॥४४॥

संसारसमुद्रका पारी रहने अर्थात् संसारातीत जीवन्मुक्त विष्णुरूप रुद्रदेवलाई नमस्कार छ। संसारव्यापी रुद्रदेवलाई नमस्कार छ। दुःख, पाप आदिबाट रक्षा गर्ने रुद्रदेवलाई नमस्कार छ। उत्कृष्ट ब्रह्मज्ञान गराई संसारसागरबाट तार्ने रुद्रदेवलाई नमस्कार छ। तीर्थस्थलमा प्रतिष्ठित रुद्रदेवलाई नमस्कार छ। गङ्गा गण्डकी आदि नदीहरूका तीरमा विद्यमान रुद्रदेवलाई नमस्कार छ। गङ्गा गण्डकी आदि नदीहरूको तटमा उत्पन्न हुने बालतृणरूप रुद्रदेवलाई नमस्कार छ। जलको विकार फिँज आदिमा रहने रुद्रदेवलाई नमस्कार छ ॥४२॥ नदीका बालुवामा रहनेवाला रुद्रदेवलाई नमस्कार छ। नदी आदिका प्रवाहमा रहने रुद्रदेवलाई नमस्कार छ। क्षुद्र पाषाणवाला भूमिका रूपमा रहने रुद्रदेवलाई नमस्कार छ। स्थिर जलपूर्ण प्रदेशरूप रुद्रदेवलाई नमस्कार छ। जटामुकुटधारी रुद्रदेवलाई नमस्कार छ। शुभाशुभ हेर्न नित्य समानरूपमा उभिइरहने अथवा सर्वान्तर्यामी कूटस्थरूप रुद्रदेवलाई नमस्कार छ। मरुभूमिरूप रुद्रदेवलाई नमस्कार छ। अनेक व्यक्तिहरूद्वारा सुशोभित मार्गमा रहनेवाला रुद्रदेवलाई नमस्कार छ ॥४३॥ गाईका समूहमा रहने अथवा व्रजभूमिमा गोपेश्वरका रूपमा रहने रुद्रदेवलाई नमस्कार छ। गोशालामा रहने गोष्ठाधिपति रुद्रदेवलाई नमस्कार छ। शय्यामा रहने रुद्रदेवलाई नमस्कार छ। घरमा रहने रुद्रदेवलाई नमस्कार छ। हृदयमा रहने जीवरूपी रुद्रदेवलाई नमस्कार छ। पानीका भुँमरीमा रहने रुद्रदेवलाई नमस्कार छ। दुर्ग अरण्य आदि ठाउँमा रहने रुद्रदेवलाई नमस्कार छ। विषम पर्वत, गुफा आदि स्थलमा अथवा गहिरो जलमा विद्यमान रुद्रदेवलाई नमस्कार छ ॥४४॥

नम॑: शुष्क्क्या॑य च हरि॒त्या॑य च॒ नम॑: पा ᳪ सव्या॑य च रज॒स्या॑य च॒ नमो॒
लोप्प्या॑य चोल॒प्प्या॑य च॒ नम॒ऽ ऊर्व्व्या॑य च सूर्व्व्या॑य च॒ नम॑: प॒र्ण्णा॑य ॥४५॥
नम॑: प॒र्ण्णा॑य च पर्ण्णश॒दाय॑ च॒ नम॑ऽ उद्गु॒रमा॑णाय चाभिघ्न॒ते च॒ नम॑ऽ
आखिद॒ते च॑ प्प्रखिद॒ते च॒ नम॑ऽ इषुकृद्भ्यो॑ धनु॒ष्कृद्भ्य॑श्च वो॒ नमो॒
नमो॑ वः किरि॒केभ्यो॑ दे॒वाना ᳪ हृद॑येभ्यो॒ नमो॑ विचिन्न्व॒त्केभ्यो॒ नमो॒
विक्षिणत्केभ्यो॒ नम॑ऽ आनिर्ह॒तेभ्य॑: ॥४६॥
द्रा॒पे॒ऽ अन्ध॑सस्पते॒ दरि॑द्र॒ नील॑लोहित ॥
आ॒साम्प्र॒जाना॑मे॒षाम्प॑शू॒नाम्मा भेर्म्मा रो॒ङ्मो च॑ न॒: किञ्च॒नाम॑मत् ॥४७॥

काठ आदि सुकेका वस्तुमा पनि सत्ताको रूपमा रहने रुद्रदेवलाई नमस्कार छ । काँचो काठ आदिमा पनि सत्ताको रूपमा रहने रुद्रदेवलाई नमस्कार छ । धूलो आदिमा रहने रुद्रदेवलाई नमस्कार छ । रजोगुण अथवा रजःकणमा रहने रुद्रदेवलाई नमस्कार छ । सबै इन्द्रियको वृत्ति निवृत्त भएपछि अथवा प्रलयावस्थामा पनि साक्षी भएर रहने रुद्रदेवलाई नमस्कार छ । बल्वज आदि तृण विशेषमा रहने उलप्यरूपी रुद्रदेवलाई नमस्कार छ । वडवानलमा रहने रुद्रदेवलाई नमस्कार छ । प्रलयाग्निमा विद्यमान रुद्रदेवलाई नमस्कार छ ॥४५॥ वृक्षका पातको रूपमा रहेका रुद्रदेवलाई नमस्कार छ । रुखका पातहरू झरेपछि वसन्त ऋतुको रूपमा विराजमान रुद्रदेवलाई नमस्कार छ । पुरुषार्थ परायण रहने रुद्रदेवलाई नमस्कार छ । सबैतिरबाट शत्रुलाई हनन गर्ने रुद्रदेवलाई नमस्कार छ । सबैतिरबाट अभक्तलाई दीनदुःखी बनाइदिने रुद्रदेवलाई नमस्कार छ । आफ्ना भक्तहरूको दुःखबाट दुःखी हुँदै दयालु बन्ने रुद्रदेवलाई नमस्कार छ । बाण र धनुषको निर्माण गर्ने रुद्रदेवलाई नमस्कार छ । वृष्टि आदिद्वारा जगत्को पालन गर्ने, देवताका पनि हृदय भएका, अग्नि, वायु, सूर्य आदि रूप धारण गर्ने रुद्रदेवलाई नमस्कार छ । धर्मात्मा र पापीलाई छुट्याउने अग्नि आदिको रूपमा विराजमान रुद्रहरूलाई नमस्कार छ । भक्तहरूका पापताप आदि अमङ्गललाई हटाइदिने साक्षीस्वरूप अग्नि आदि रुद्रहरूलाई नमस्कार छ । सृष्टिका आरम्भमा मुख्यतया यिनै लोकबाट निस्किएका अग्नि, वायु सूर्य रूप रुद्रदेवलाई नमस्कार छ ॥४६॥ दुराचारीहरूलाई कुत्सित गति दिलाउने हे द्रापे ! हे अन्धसस्पते ! हे दरिद्र ! (निष्किञ्चन) हे नीललोहित ! हजुरले हाम्रा सन्ततिलाई र पशुहरूलाई भयभीत नगराइदिनुहोस् । यिनीहरूलाई नष्ट नगरिदिनुहोस् र यिनीहरूलाई कुनै प्रकारको रोगबाट ग्रस्त नबनाइदिनुहोस् ॥४७॥

इमारुद्द्रायतवसेकपर्द्दिनेक्षयद्द्वीरायप्प्रभरामहेमतीः ॥
यथाशमसदद्विपदेचतुष्प्पदेविश्श्वम्पुष्ट्टङ्ग्रामेऽअस्म्मिन्ननातुरम् ॥४८॥
यातेरुद्रशिवातनूःशिवाविश्श्वाहाभेषजी ॥
शिवारुतस्यभेषजीतयानोमृडजीवसे ॥४९॥
परिनोरुद्द्रस्यहेतिर्व्वृणक्तुपरित्त्वेषस्यदुर्म्मतिरघायोः ॥
अवत्स्थिरामघवद्भ्यस्तनुष्ष्वमीड्द्ध्वस्तोकायतनयायमृड ॥५०॥
मीढुष्टमशिवतमशिवोनःसुमनाभव ॥
परमेवृक्षऽआयुधन्निधायकृत्तिंवसानऽआचरपिनाकम्बिभ्भ्रदागहि ॥५१॥
विकिरिदद्रविलोहितनमस्तेऽअस्तुभगवः ॥
यास्तेसहस्रंहेतयोन्न्यमस्म्मन्निवपन्तुताः ॥५२॥

जसरी मेरा पुत्रादि र गाई आदि पशुहरूको कल्याण हुन्छ र जसरी यो गाउँमा सबै प्राणीहरू उपद्रवरहित हुन्छन् त्यस्तो बनाइदिनुहओस् । त्यसका लागि हाम्रा बुद्धि श्रेष्ठ बनून् । हामीहरू यिनै सद्बुद्धिद्वारा गरिएका कर्महरूलाई जटाजूटधारी शूरवीरका निवास भएका रुद्रदेवमा समर्पित गर्दछौं ॥४८॥ हे रुद्र ! जो हजुरको यो शान्त, कल्याणकारी, सांसारिक व्याधिबाट निवृत्त गराउनेवाला र शारीरिक कष्ट पनि हटाइदिने परम औषधीरूप विग्रह छ त्यसबाट हाम्रो जीवनलाई सुखी बनाइदिनुहवस् ॥४९॥ रुद्रदेवका हतियारहरूले हामीलाई त्यागिदिऊन् । रिसाहा मानिसका दुर्बुद्धिले पनि हामीलाई छोडिदिऊन् । अर्थात् हामीलाई दुःख नदिऊन् । इच्छानुसारका वस्तु दिनेवाला हे रुद्रदेव ! हजुरले आफ्नो धनुलाई ताँदोरहित बनाई यजमानको भय हटाइदिनुहोस् र यिनका पुत्र पौत्रादिहरूलाई सुखी बनाइदिनुहओस् ॥५०॥ अभीष्ट फल र कल्याणको वृष्टि गर्नेवाला हे रुद्रदेव ! हजुर हामीमाथि प्रसन्न रहनुहोस् । आफ्ना त्रिशूल आदि हतियारहरू टाढै रुखमा राखिदिनुहोस् । गजचर्म धारण गरी तपस्या गर्नुहोस् र केवल शोभाका निमित्त धनुर्धारण गर्दै हामीलाई दर्शन दिन आउनुहोस् ॥५१॥ अनेक प्रकारका उपद्रवहरूलाई नष्ट गरिदिनेवाला, शुद्धस्वरूपवाला हे रुद्रदेव ! हामी हजुरलाई प्रणाम गर्दछौं । हजुरका असङ्ख्य हतियारहरू हामीभन्दा अन्यत्र अरुमाथि परून् ॥५२॥

सहस्राणिसहस्रशोबाह्वोस्तवहेतयः॥
तासामीशानोभगवः पराचीनामुखाकृधि॥५३॥
असङ्ख्यातासहस्राणियेरुद्द्राऽअधिभूम्म्याम्॥
तेषाᳬसहस्रयोजनेवधन्वानितन्मसि॥५४॥
अस्मिमन्न्महत्त्यर्ण्णवेन्तरिक्षेभवाऽअधि॥
तेषाᳬसहस्रयोजनेवधन्वानितन्मसि॥५५॥
नीलग्ग्रीवाः शितिकण्ठादिवᳬरुद्द्राऽउपश्रिताः॥
तेषाᳬसहस्रयोजनेवधन्वानितन्मसि॥५६॥
नीलग्ग्रीवाः शितिकण्ठाः शर्वाऽअधः क्षमाचराः॥
तेषाᳬसहस्रयोजनेवधन्वानितन्मसि॥५७॥
येवृक्षेषुशष्पिञ्जरानीलग्ग्रीवाविलोहिताः॥
तेषाᳬसहस्रयोजनेवधन्वानितन्मसि॥५८॥

गुण र ऐश्वर्यले युक्त हे जगत्पति रुद्रदेव ! हजुरका हातमा जो हजारौं प्रकारका हतियारहरू छन्, तिनका टुप्पा हामीभन्दा विपरीत दिशातिर उन्मुख गराइदिनुहोस्। अर्थात् हामीतिर नफर्काइदिनुहोस् ॥५३॥ पृथिवीमा जति असङ्ख्य रुद्रहरू रहन्छन् तिनका अपरिगणित धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५४॥ बादलले भरिएको यो महान् अन्तरिक्षमा जति रुद्रहरू रहन्छन् तिनीहरूका असङ्ख्य धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५५॥ जसको गलाको केही भाग नीलो र बाँकी भाग सेतो वर्णको छ, जो द्युलोकमा रहन्छन् ती रुद्रहरूका असङ्ख्य धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५६॥ कतै नीलो र कतै सेतो वर्णको कण्ठ भएका, भूमिको तल्लो भागमा पाताललोकमा निवास गर्ने रुद्रदेवका असङ्ख्य धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५७॥ किललो घाँसजस्तै हरियो वर्ण भएका र कहीँ नीलो, कही सेतो वर्णवाला गला भएका जुन रुद्रदेव रक्तमांस आदि रहित तेजोमय शरीरवाला छन् र पिपल आदि वृक्षमा रहन्छन् ती रुद्रदेवका असङ्ख्य धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५८॥

येभूतानामधिपतयोविशिखासःकपर्द्दिनः॥
तेषांꣳसहस्त्रयोजनेवधन्वानितन्मसि॥५९॥
येपथाम्पथिरक्षयऽऐलवृदाऽआयुर्युधः॥
तेषांꣳसहस्त्रयोजनेवधन्वानितन्मसि॥६०॥
येतीर्त्थानिप्प्रचरन्तिसृकाहस्तानिषङ्गिणः॥
तेषांꣳसहस्त्रयोजनेवधन्वानितन्मसि॥६१॥
येन्नेषुविविद्ध्यन्तिपात्रेषुपिबतोजनान्॥
तेषांꣳसहस्त्रयोजनेवधन्वानितन्मसि॥६२॥
यऽएतावन्तश्च्चभूयांꣳसश्च्चदिशोरुद्द्राविंतस्थिरे॥
तेषांꣳसहस्त्रयोजनेवधन्वानितन्मसि॥६३॥

जसका शिरमा रौं छैनन् तर जसले जटाजूट धारण गरेका छन्। जो भूत-पिशाचका अधिपति हुन् ती रुद्रका धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥५९॥ अन्न दिएर प्राणीहरूलाई पालन गर्ने, आजीवन युद्ध गर्ने, लौकिक वैदिक मार्गको रक्षा गर्ने र अधिपति भनिने जुन रुद्रदेव छन् तिनका धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढा रहेको बाटोमा लगेर राखिदिन्छौं ॥६०॥ हातमा वज्र र खड्ग आदि हतियार लिएर जुन रुद्र तीर्थमा घुम्नुहुन्छ उहाँका धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥६१॥ खाइने अन्नमा रहेर जुन रुद्रले अन्नभोक्ता प्राणीहरूलाई नै पीडित गराइदिनुहुन्छ र भाँडोमा रहेको दुग्ध आदि पदार्थमा विराजमान जुन रुद्रदेवले त्यसलाई पिउनेवाला मानिसलाई रोग आदिद्वारा कष्ट दिनुहुन्छ त्यस्ता रुद्रदेवका धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौ ॥६२॥ दशै दिशामा व्याप्त जो अनेक रुद्रहरू हुनुहुन्छ उहाँका धनुषहरूलाई ताँदोरहित बनाई हामीभन्दा हजारौं कोश टाढाको बाटोमा लगेर राखिदिन्छौं ॥६३॥जुन रुद्रदेव द्युलोकमा विद्यमान हुनुहुन्छ, जुन रुद्रदेवका बाणहरू वृष्टिरूप छन् ,त्यस्ता रुद्रदेवलाई नमस्कार छ । ती रुद्रदेवका लागि पूर्वपट्टि दश औँला जोडी प्रणाम गर्दछु । यस्तै दक्षिणपट्टि दश औँला जोडी प्रणाम गर्दछु । पश्चिमपट्टि दश औँला जोडी प्रणाम गर्दछु । उत्तरपट्टि दश औँला जोडी प्रणाम गर्दछु । माथिपट्टि दश औँला जोडी प्रणाम गर्दछु । ती रुद्रदेवले हामीलाई रक्षा गरून् र हामीलाई सुखी बनाऊन् । ती रुद्रदेवले

नमोस्तुरुद्द्रेब्भ्योयेदिविय़ेषांव्वर्षमिषवः ॥ तेब्भ्योदशप्प्राचीर्द्दशदक्षिणा
दशप्प्रतीचीर्द्दशोदीचीर्द्दशोद्ध्वाः ॥तेब्भ्योनमोऽअस्तुतेनोवन्तुतेनोमृड
यन्तुतेयन्द्विष्मोयश्च्चनोद्द्वेष्टितमेषाञ्जम्भेदद्ध्मः ॥६४॥
नमोस्तुरुद्द्रेब्भ्योयेन्तरिक्षेयेषांवातऽइषवः ॥ तेब्भ्योदशप्प्राचीर्द्दशदक्षिणा
दशप्प्रतीचीर्द्दशोदीचीर्द्दशोद्ध्वाः ॥तेब्भ्योनमोऽअस्तुतेनोवन्तुतेनोमृड
यन्तुतेयन्द्विष्मोयश्च्चनोद्द्वेष्टितमेषाञ्जम्भेदद्ध्मः ॥६५॥
नमोस्तुरुद्द्रेब्भ्योयेपृथिव्यांयेषामन्नमिषवः ॥तेब्भ्योदशप्प्राचीर्द्दशदक्षिणा
दशप्प्रतीचीर्द्दशोदीचीर्द्दशोद्ध्वाः ॥तेब्भ्योनमोऽअस्तुतेनोवन्तुतेनोमृड
यन्तुतेयन्द्विष्मोयश्च्चनोद्द्वेष्टितमेषाञ्जम्भेदद्ध्मः ॥६६॥

*(पुनर्नमस्ते इत्यादि षोडशकं पठित्वा)*

## ॥ इति पञ्चमोऽध्यायः ॥

जसलाई द्वेष गर्दछन्, हामीहरू जसलाई द्वेष गर्दछौं र जसले हामीसंग द्वेष गर्दछन् त्यस्ता पुरुषलाई हामीहरू ती रुद्रका भयङ्कर दाँत भएका मुखमा हालिदिन्छौं ॥६४॥ जुन रुद्रदेव अन्तरिक्षमा विद्यमान हुनुहुन्छ । जुन रुद्रदेवका बाणहरू वायुरूप छन् । त्यस्ता रुद्रदेवलाई नमस्कार छ । ती रुद्रदेवका लागि पूर्वपट्टि दश औँला जोडी प्रणाम गर्दछु । यस्तै दक्षिणपट्टि दश औँला जोडी प्रणाम गर्दछु । पश्चिमपट्टि दश औँला जोडी प्रणाम गर्दछु । उत्तरपट्टि दश औँला जोडी प्रणाम गर्दछु । माथिपट्टि दश औँला जोडी प्रणाम गर्दछु । ती रुद्रदेवले हामीलाई रक्षा गरून् र हामीलाई सुखी बनाऊन् । ती रुद्रदेवले जसलाई द्वेष गर्दछन्, हामीहरू जसलाई द्वेष गर्दछौं र जसले हामीसँग द्वेष गर्दछन् त्यस्ता पुरुषलाई हामीहरू ती रुद्रका भयङ्कर दाँत भएका मुखमा हालिदिन्छौं ॥६५॥ जुन रुद्रदेव पृथिवीमा विद्यमान हुनुहुन्छ,जुन रुद्रदेवका बाणहरू अन्नरूप छन्, त्यस्ता रुद्रदेवलाई नमस्कार छ । ती रुद्रदेवका लागि पूर्वपट्टि दश औँला जोडी प्रणाम गर्दछु । यस्तै दक्षिणपट्टि दश औँला जोडी प्रणाम गर्दछु । पश्चिमपट्टि दश औँला जोडी प्रणाम गर्दछु । उत्तरपट्टि दश औँला जोडी प्रणाम गर्दछु । माथिपट्टि दश औँला जोडी प्रणाम गर्दछु । ती रुद्रदेवले हामीलाई रक्षा गरून् र हामीलाई सुखी बनाऊन् । ती रुद्रदेवले जसलाई द्वेष गर्दछन्, हामीहरू जसलाई द्वेष गर्दछौं र जसले हामीसंग द्वेष गर्दछन् त्यस्ता पुरुषलाई हामीहरू ती रुद्रका भयङ्कर दाँत भएका मुखमा हालिदिन्छौं ॥६६॥

*॥ पञ्चम अध्याय समाप्त ॥*

# अथ षष्ठोऽध्यायः

हरिः ॐ एषतैरुद्द्रभागःसहस्वस्राम्बिकयातञ्जुषस्वस्वाहैषतै
रुद्द्रभागऽआखुस्तैपशुः॥१॥
अवरुद्द्रमदीमह्यवदेवन्त्र्यम्बकम्॥
यथानोवस्यसस्करद्यथानःश्श्रेयसस्करद्यथानोव्यवसाययात्॥२॥
नमस्तेरुद्द्रमन्न्यवऽउतोतऽइषवेनमः॥ बाहुब्भ्यामुततेनमः॥३॥
यातैरुद्द्रशिवातनूरघोरापापकाशिनी॥
तयानस्तन्न्वाशन्तमयागिरिशन्ताभिचाकशीहि॥४॥
नतंविदाथयऽइमाजजानान्न्यद्युष्म्माकमन्तरम्बभूव॥
नीहारेणप्प्रावृताजल्प्प्याचासुतृपऽउक्क्थशासश्च्चरन्ति॥५॥
व्विश्श्वकर्म्माह्यजनिष्ट्टदेवऽआदिद्गन्धर्वोऽअभवद्द्वितीयः॥
तृतीयःपिताजनितौषधीनामपाङ्गर्भव्यदधात्पुरुत्रा॥६॥
मीढुष्ट्टमशिवतमशिवोनःसुमनाभव॥

## छैठौं अध्याय

*महच्छिरःसूक्त–*

हे रुद्रदेव ! हामीले दिएको यो पुरोडाश (हवि) हजुरको भाग हो । हजुरले आफ्नी बहिनी अम्बिकाका साथ यसलाई स्वीकार गर्नुहोस् । यो हवि सुहुत बनोस् । हामीद्वारा अवकीर्ण भएको यो पुरोडाश हजुरको भाग हो । हजुरले यसको सेवन गर्नुहोस् । हजुरको नजिकमा रहने मूषक पनि रक्षणीय छ ॥१॥ चित्तमा रुद्र र त्र्यम्बकको ध्यान गर्दै (अन्य देवताभन्दा पृथक् गर्दै) हामी रुद्रदेवलाई अन्न अर्पण गर्दछौं । ती रुद्रदेवले हामीलाई निवसनशील र बान्धवहरूमा श्रेष्ठ बनाइदिऊन् र तिनले हामीलाई सम्पूर्ण कार्यमा शीघ्र निर्णय लिन सक्ने शक्ति प्रदान गरून् । यसैका लागि हामी उनको उपासना गर्दछौं ॥२॥(३-४ को अर्थ पृ.५८ मा) हे प्राणीहरू हो ! यो सम्पूर्ण पञ्चमहाभूत र यहाँका प्राणीलाई उत्पन्न गर्ने सबैभित्र व्याप्त परमात्मालाई तिमीहरू चिन्दैनौ । जसरी कुहिरोले ढाकिएको वस्तु देखिंदैन त्यसरी अज्ञानावृत तिमीहरूले जीवभावबाट आच्छन्न भई वेकारका अहङ्कार र ममता गरी बस्दछौ र यज्ञमा ऐहलौकिक एवं पारलौकिक भोगपरक वाक्यहरू उच्चारण गरी मख्ख भई घुमिरहन्छौ ॥५॥ ब्रह्माण्डमा सर्वप्रथम तिनै विश्वकर्मा पुरुषको रूपमा प्रादुर्भाव भए र त्यसपछि देवता, त्यसपछि गन्धर्व आदिको रूपमा उत्पन्न हुने काम गरे । यो दोस्रो

परमेवृक्षऽआयुधन्निधायकृत्तिंवसानऽआचरपिनाकम्बिभ्रदागहि॥७॥
विकिरिद्रविलोहितनमस्तेऽअस्तुभगवः॥
यास्तैसहस्रꣳहेतयोऽन्यमस्मन्निवपन्तुताः॥८॥
सहस्राणिसहस्रशोबाह्वोस्तवहेतयः॥
तासामीशानोभगवःपराचीनामुखाकृधि॥९॥
असङ्ख्यातासहस्राणियेरुद्द्राऽअधिभूम्याम्॥
तेषाꣳसहस्रयोजनेवधन्वानितन्मसि॥१०॥

*( चमकाध्यायपाठे इतः षष्ठाध्यायः प्रारभ्यते )*

वयꣳसोमव्रतेतवमनस्तनूषुबिभ्रतः॥ प्रजावन्तःसचमेहि॥११॥
एषतेरुद्द्रभागःसहस्वस्राम्बिकयातञ्जुषस्वस्वाहैषते
रुद्द्रभागऽआखुस्तेपशुः॥१२॥
अवरुद्द्रमदीमह्यवदेवन्त्र्यम्बकम्॥

सृष्टि हो। त्यसपछि औषधीलाई उत्पन्न गरे र तिनलाई पनि पोषण गर्न जल उत्पन्न गरे। यो उनको तेस्रो सृष्टि हो। यिनै पर्जन्यले विविध जलद्वारा अनेक तरिकाले गर्भधारण गराउने र सृष्टि विस्तार गर्ने गर्दछन्॥६॥ (७-१० को अर्थ पृ.७१ मा) हे सोमदेव ! हामी यजमानहरू पुत्रपौत्रादिले सम्पन्न भई यज्ञ र व्रतमा हजुरको स्वरूपमा चित्त लगाई हजुरकै कृपास्वरूप प्राप्त वस्तुहरूको सेवन गरौं ॥११॥(१२-१३ को अर्थ पृ.७५ मा) हे रुद्रदेव ! हजुर औषधीसमान सम्पूर्ण उपद्रवहरूलाई नष्ट गर्नेवाला हुनुहुन्छ। त्यसैले हाम्रा गाई, घोडा र नोकर चाकर आदिलाई सम्पूर्ण रोग निवारण गर्ने औषधि दिनुहोस् र हाम्रा भेडाभेडी आदि सम्पूर्ण पशुहरूलाई सुख दिनुहोस्॥१४॥ दिव्यगन्धले युक्त मृत्यु–रहित धनधान्य दिने तीन नेत्र भएका रुद्रदेवलाई हामी पूजा गर्दछौं। ती रुद्रदेवले हामीलाई अपमृत्युबाट (जन्ममृत्युको चक्रबाट) मुक्त गरिदिनुहोस्। जसरी काँक्रोको फल ज्यादै पाकेपछि आफैं भेट्नाबाट छुट्छ, त्यसरी नै हामी पनि मृत्युको बन्धनबाट छुटौं, तर अभ्युदय र निश्रेयसरूप अमृतत्वसंग हाम्रो सम्बन्ध नछुटोस्। पति दिलाउने सुगन्धविशिष्ट त्रिनेत्र रुद्रदेवको हामी पूजा गर्दछौं। जसरी काँक्रोको फल ज्यादै पाकेपछि आफैं भेट्नाबाट छुट्छ, त्यसरी नै हामी कुमारीहरू (जीवात्माहरू) मातापिता, भाइबन्धु आदिको सम्बन्धबाट छुटौं, तर शिवको प्रसादले आफ्ना पति (शिवजी) संग हाम्रो सम्बन्ध नछुटोस् ॥१५॥ हे रुद्रदेव ! हजुरको यो अवस नामक हविशेष (यात्रामा भोजनयोग्य ओदनविशेष) भोज्य छ, त्यसले युक्त

यथानोवस्यसस्करद्यथानःश्रेयसस्करद्यथानोव्यवसाययात्॥१३॥
भेषजमसिभेषजङ्गवेश्वायपुरुषायभेषजम्॥सुखम्मेषायमेष्यै॥१४॥
त्र्यम्बकंयजामहेसुगन्धिम्पुष्टिवर्द्धनम्॥
उर्वारुकमिवबन्धनान्मृत्योर्मुक्षीयमामृतात्॥
त्र्यम्बकंयजामहेसुगन्धिम्पतिवेदनम्॥
उर्वारुकमिवबन्धनादितोमुक्षीयमामुतः॥१५॥
एतत्तेरुद्रावसन्तेनपरोमूजवतोतीहि॥
अवततधन्वापिनाकावसःकृत्तिवासाऽअहिंसन्नःशिवोतीहि॥१६॥
त्र्यायुषञ्जमदग्नेःकश्यपस्यत्र्यायुषम्॥
यद्देवेषुत्र्यायुषन्तन्नोऽअस्तुत्र्यायुषम्॥१७॥
शिवोनामासिस्वधितिस्तेपितानमस्तेऽअस्तुमामाहिंसीः॥ निवर्त्तया
म्यायुषेन्नाद्यायप्रजननायरायस्पोषायसुप्रजास्त्वायसुवीर्याय॥१८॥

*॥ इति षष्ठोऽध्यायः ॥*

भई हजुरले आफ्नो धनुको ताँदो हटाई मुञ्जवान् पर्वतका पल्लो छेउमा जानुहोस् । त्यहाँ रहँदा हजुरले आफ्नो पिनाक धनुलाई सबैतिरबाट ढाकिदिनुहोस् । जसबाट कोही पनि हजुरको धनुदेखि भयभीत नबनून् । हे रुद्रदेव ! हजुरले चर्मवस्त्र धारण गरी अहिंसक बनी हाम्रो पूजाबाट सन्तुष्ट हुँदै मुञ्जवान् पर्वतलाई उल्लङ्घन गर्न समर्थ हुनुहोस् ॥१६॥ जगदग्नि ऋषिको बाल्य, यौवन र वृद्धावस्थाका जुन उत्तम चरित्रहरू छन्, कश्यप प्रजापतिका तीनै अवस्थाका जुन चरित्र छन्, त्यस्तै देवगणमा पनि तीनै अवस्थामा रहेका जुन प्रशंसनीय चरित्रहरू छन् । त्यस्तै चरित्र हामी यजमानमा पनि हओस् ॥१७॥ हे क्षुराधिष्ठातृ देव ! तिम्रो नाम शान्त हो । वज्र तिम्रो पिता हो । म तिमीलाई नमन् गर्दछु । तिमीले मेरो हिंसा नगर्नू । हे यजमान ! धेरै दिनसम्म बाँच्न, अन्नभक्षण गर्न, सन्तति प्राप्त गर्न, सम्पत्तिको अभिवृद्धिका लागि, योग्य सन्तति उत्पन्न गर्नका लागि र उत्तम सामर्थ्यका लागि म तिम्रो मुण्डन गर्दछु ॥१८॥

*॥ छैठौँ अध्याय समाप्त ॥*

**ईश्वरो वरदो नित्यं वृषगामी त्रिशूलधृक् ।**
**त्रिनेत्रो दक्षमथनो रुद्रः शान्तिं ददातु मे ॥**
**शुभं रुद्रः सुप्रसन्नः सुप्रीतो वरदो भव ॥**

# अथ सप्तमोऽध्यायः

हरिः ॐ उग्रश्चभीमश्चध्वान्तश्चधुनिश्च ॥
सासह्वाँश्चाभियुग्वाचविक्षिपः स्वाहा ॥ १ ॥
अग्निꣳ हृदयेनाशनिꣳ हृदयाग्रेणपशुपतिङ्कृत्स्नहृदयेनभवंय्यक्ना ॥
शर्वम्मतस्नाब्भ्यामीशानम्मन्युनामहादेवमन्तः पर्शव्येनोग्ग्रन्देवं
वनिष्ठुनावसिष्ठहनुः शिङ्गीनिकोश्याब्भ्याम् ॥ २ ॥
उग्ग्रँल्लोहितेनमित्रꣳ सौव्रत्त्येनरुद्द्रन्दौर्व्रत्त्येनेन्द्रम्प्रक्क्रीडेनमरुतोब
लेनसाद्ध्यान्प्रमुदा ॥ भवस्यकण्ठ्यꣳ रुद्द्रस्यान्तः पार्श्व्यम्महादेवस्य
यकृच्छर्वस्यवनिष्ठुः पशुपतेः पुरीतत् ॥ ३ ॥
वाजश्चमेप्रसवश्चमेप्रयतिश्चमेप्रसितिश्चमेधीतिश्चमेक्रतु
श्चमेस्वरश्चमेश्लोकश्चमेश्रवश्चमेश्रुतिश्चमेज्ज्योतिश्चमे
स्वश्चमेयज्ञेनकल्पन्ताम् ॥ ४ ॥

## सातौँ अध्याय

रुद्रजटासूक्त–

उग्र स्वभाववाला, डरलाग्दा, चर्को आवाज दिने, शत्रुलाई थर्काइदिने, शत्रुलाई तिरस्कृत गरिदिने, हाम्रा सामु योग प्राप्त गर्ने, दूषित पदार्थहरूलाई फ्याँकिदिन सक्ने जुन सात मरुत्‌देवहरू छन् उनीहरूका लागि म यो श्रेष्ठ आहुति समर्पित गर्दछु ॥१॥ म अग्निलाई हृदयद्वारा, अशनिदेवलाई हृदयको अग्रभागबाट, पशुपतिलाई पूरै हृदयबाट, भवदेवलाई यकृत्‌वाट्, सर्वदेवलाई मतस्ना नामक हृदयकोणबाट, ईशानदेवलाई क्रोधबाट, महादेवलाई कोखाको अन्तर्भागको मांसविशेषबाट, उग्रदेवतालाई ठूलो आन्द्राबाट र सिंगीनीदेवलाई हृदयकोशको मांसपिण्डबाट प्रसन्न गराउँदछु ॥२॥ उग्रदेवतालाई रगतले, मित्रदेवतालाई शुभकर्मानुष्ठानले, रुद्रदेवलाई अशोभन कर्मले, इन्द्र देवलाई उत्कृष्ट क्रीडाहरूले, मरुत्देवतालाई बलले, साध्यदेवतालाई हर्षले, भवदेवतालाई कण्ठभागले, रुद्रदेवतालाई कोखाको अन्तर्भागको मांसविशेषले, महादेवलाई यकृत्‌ले सर्वदेवतालाई ठूलो आन्द्राले र पशुपतिदेवलाई पुरीतत् (हृदयसम्बन्धी अवयवविशेषले) सन्तुष्ट गराउँदछु ॥३॥ यो यज्ञद्वारा फलको रूपमा अन्न, अन्नदान सम्बन्धी अनुज्ञा, शुद्धता, अन्नविषयक उत्कण्ठा, ध्यान, सत्सङ्कल्प, सुन्दर शब्द, स्तुतिसामर्थ्य, वेदमन्त्र वा श्रवणशक्ति, ब्राह्मण, प्रकाश वा स्वर्ग यी सबै मलाई प्राप्त होऊन् ॥४॥

प्प्राणश्च्चमेपानश्च्चमेव्यानश्च्चमेसुश्च्चमेचित्तञ्चमऽआधीत ञ्चमेवाक्चमेमनश्च्चमेचक्षुश्च्चमेश्श्रोत्रञ्चमेदक्षश्च्चमेबलञ्चमे यज्ञेनकल्प्यन्ताम् ॥५॥

इमामेऽअग्ग्नऽइष्ट्टकाधेनवः सन्त्वेकाचदशचदशचशतञ्चशतञ्च सहस्रञ्चसहस्रञ्चायुतञ्चायुतञ्चनियुतञ्चनियुतञ्चप्प्रयुतञ्चार्ब्बुद ञ्चन्यर्ब्बुदञ्चसमुद्द्रश्च्चमद्ध्यञ्चान्तश्च्चपरार्द्धश्च्चैतामे ऽअग्ग्नऽइष्टकाधेनवः सन्त्वमुत्रामुष्मिँल्लोके ॥६॥

विश्श्वतश्चक्षुरुतविश्श्वतोमुखोविश्श्वतोबाहुरुतविश्श्वतस्पात्॥ सम्बाहुब्भ्यान्धमतिसम्पतत्रैर्द्द्यावाभूमीजनयन्देवऽएकः ॥७॥

*॥ इति सप्तमोऽध्यायः ॥*

---

मैले अनुष्ठान गरिएका यज्ञद्वारा प्राण (शरीरभित्र रहने वायु), अपान (शरीरको अधोदेशमा रहने वायु) , व्यान (सबै शरीरमा रहने वायु), असु (मानिसलाई प्रवृत्त गराउने वायु), मानससङ्कल्प (बाह्यविषयसम्बन्धी ज्ञान) वाणी, शुद्ध मन, पवित्र दृष्टि, श्रवण सामर्थ्य, ज्ञानेन्द्रियको कुशलता र कर्मेन्द्रियसम्बन्धी बल यी सबै मलाई प्राप्त होऊन् ॥५॥ हे अग्निदेव ! यज्ञका निमित्त स्थापित यी पाँच इष्टकाहरू मलाई अभीष्ट फल दिनेवाला बनून् । यी फलहरू इष्टकाझैं क्रमशः दश–दश, सय–सय, हजार–हजार, दशौंहजार, लाखौं-लाखौं, दशौं लाख, करोडौं–करोडौं, दशौं करोड, अरबौं– अरबौं, समुद्रौं, मध्यौं, अन्तौं र यतिमात्र होइन परार्धौं सङ्ख्याका छन् । हे अग्निदेव ! यी कामधेनु जस्ता इष्टफलहरू यस लोकमा र परलोकमा पनि हामीलाई प्राप्त होऊन् ॥६॥ ती परमात्मा सबैतिर चक्षु भएका सर्वद्रष्टा, सबैतिर मुख भएका विश्वतोमुख, सबैकाम गर्न सक्ने विश्वतोबाहु र सबैतिर पुग्न सक्ने विश्वतस्पात् हुनुहुन्छ । यस्ता एक अद्वितीय परमात्माले आफ्ना हातहरूद्वारा सबै तत्त्वहरूलाई समायोजन गर्दै आफ्ना चरणद्वारा देवलोक र मनुष्यलोक लगायत चराचर जगत्लाई उत्पन्न गर्नुहुन्छ ॥७॥

*॥ सातौँ अध्याय समाप्त ॥*

# चमकाध्यायपाठः

चमकाध्यायपाठपक्षे पूर्वोक्तं सप्तममध्यायमपठित्वा उग्रश्चेति सप्त, वाजश्च मे इत्याद्या एकोनत्रिंशत् कण्डिकाश्च पठ्यन्ते । ताश्च यथा–

# अथ सप्तमोऽध्यायः

हरिः ॐ उग्रश्च भीमश्च ध्वान्तश्च धुनिश्च ॥
सासह्वाँश्चाभियुग्वा च विक्षिपः स्वाहा ॥ १ ॥
अग्निꣳ हृदयेनाशनिꣳ हृदयाग्रेण पशुपतिं कृत्स्नहृदयेन भवं यक्ना ॥
शर्वम्मतस्नाभ्यामीशानम्मन्युना महादेवमन्तः पर्शव्येनोग्रन्देवं वनिष्ठुना वसिष्ठहनुः शिङ्गीनि कोश्याभ्याम् ॥ २ ॥
उग्रँल्लोहितेन मित्रꣳ सौव्रत्त्येन रुद्रन्दौर्व्रत्त्येनेन्द्रम्प्रक्रीडेन मरुतो बलेन साद्ध्यान्प्रमुदा ॥ भवस्य कण्ठ्यꣳ रुद्रस्यान्तः पार्श्व्यम्महादेवस्य यकृच्छर्वस्य वनिष्ठुः पशुपतेः पुरीतत् ॥ ३ ॥
लोमभ्यः स्वाहा लोमभ्यः स्वाहा त्वचे स्वाहा त्वचे स्वाहा लोहिताय स्वाहा लोहिताय स्वाहा मेदोभ्यः स्वाहा मेदोभ्यः स्वाहा ॥ माꣳसेभ्यः स्वाहा माꣳसेभ्यः स्वाहा स्नावभ्यः स्वाहा स्नावभ्यः स्वाहास्थभ्यः स्वाहास्थभ्यः स्वाहा मज्जाभ्यः स्वाहा मज्जाभ्यः स्वाहा ॥ रेतसे स्वाहा पायवे स्वाहा ॥ ४ ॥
आयासाय स्वाहा प्प्रायासाय स्वाहा संय्यासाय स्वाहा वियासाय स्वाहोद्यासाय स्वाहा ॥ शुचे स्वाहा शोचते स्वाहा शोचमानाय स्वाहा शोकाय स्वाहा ॥ ५ ॥

---

## सातौँ अध्याय

(१-३ को अर्थ पृ. ७८ मा) समष्टि रौँ र व्यष्टि रौँको लागि म यो श्रेष्ठ आहुति प्रदान गर्छु । समष्टि छालाको लागि र व्यष्टि छालाको लागि, समष्टि रगतको लागि, व्यष्टि रगतको लागि, समष्टि बोसोको लागि, व्यष्टि बोसोको लागि, समष्टि मासुको लागि, व्यष्टि मासुको लागि, समष्टि नसाको लागि, व्यष्टि नसाको लागि, समष्टि हड्डीको लागि, व्यष्टि हड्डीको लागि, समष्टि मज्जाको लागि, व्यष्टि मज्जाको लागि, वीर्यको लागि, गुदद्वारको लागि म यो श्रेष्ठ आहुति प्रदान गर्दछु ॥४॥ देहको श्रमका अधिष्ठाता आयास देवताको लागि, इन्द्रियजन्य श्रमरूप प्रयास देवताको लागि, मन र श्रमरूप संयास देवताको लागि, बौद्धिक श्रमरूप वियास देवताको लागि र प्राणीको श्रमरूप उद्यास देवताको लागि, शुचिको लागि, शोचत्को लागि, शोचमानको लागि र शोकको लागि म यो श्रेष्ठ आहुति प्रदान गर्दछु ॥५॥

तपसेस्वाहातप्प्यतेस्वाहातप्प्यमानायस्वाहातप्प्तायस्वाहाघर्म्माय
स्वाहा॥ निष्कृत्यैस्वाहाप्प्रायश्चित्यैस्वाहाभेषजायस्वाहा ॥६॥
यमायस्वाहान्तकायस्वाहामृत्यवेस्वाहाब्ब्रह्मणेस्वाहाब्ब्रह्महत्यायै
स्वाहा॥ विश्श्वेब्भ्योदेवेब्भ्यः स्वाहाद्यावापृथिवीब्भ्याᳩ स्वाहा॥७॥

# अथाष्टमोऽध्यायः

हरिः३ॐ व्वाजश्च्चमेप्प्रसवश्च्चमेप्प्रयतिश्च्चमेप्प्रसितिश्च्चमेधीतिश्च्चमेक्क्रतुश्च्चमेस्वरश्च्चमेश्श्लोकश्च्चमेश्श्रवश्च्चमेश्श्रुतिश्च्चमेज्ज्योतिश्च्चमेस्वश्च्चमेयज्ञेनकल्प्पन्ताम्॥१॥
प्प्राणश्च्चमेपानश्च्चमेव्यानश्च्चमेसुश्च्चमेचित्तञ्चमऽआधीतञ्चमेव्वाक्चमेमनश्च्चमेचक्षुश्च्चमेश्श्रोत्रञ्चमेदक्षश्च्चमेबलञ्चमेयज्ञेनकल्प्पन्ताम्॥२॥
ओजश्च्चमेसहश्च्चमऽआत्माचमेतनूश्च्चमेशर्म्मचमेव्वर्म्मचमेङ्गानिचमेस्थीनिचमेपरूᳩषिचमेशरीराणिचमऽआयुश्च्चमेजराचमेयज्ञेनकल्प्पन्ताम्॥३॥
ज्यैष्ठ्यञ्चमऽआधिपत्त्यञ्चमेमन्न्युश्च्चमेभामश्च्चमेमश्च्चमेम्भश्च्चमेजेमाचमेमहिमाचमेव्वरिमाचमेप्प्रथिमाचमेव्वर्षिमाचमेद्राघिमाचमेवृद्धञ्चमेवृद्धिश्च्चमेयज्ञेनकल्प्पन्ताम्॥४॥ (१)

तपको लागि, तपकर्ताको लागि, तप्यमानको लागि, तप्तको लागि, घर्मको लागि, निष्कृतिको लागि, प्रायश्चित्तको लागि र औषधिको लागि म यो श्रेष्ठ आहुति प्रदान गर्दछु ॥६॥ यमको लागि, अन्तकको लागि, मृत्युको लागि, ब्रह्माको लागि, ब्रह्महत्याको लागि, विश्वदेवहरूको लागि, द्युलोकको लागि र पृथ्वीलोकको लागि म यो श्रेष्ठ आहुति प्रदान गर्दछु ॥७॥

## आठौँ अध्याय

*चमकानुवाकः—*

(१-२ को अर्थ पृ. ७८ मा) बलको कारण भएको ओज, देहबल, आत्मज्ञान, सुन्दर शरीर, सुख, कवच, हृष्टपुष्ट अङ्ग, सुदृढ हाडहरू, बलिया औँलाहरू, नीरोग शरीर, जीवन र वृद्धावस्थासम्मको आयु यी सबै मैले गरेको यस यज्ञको फलको रूपमा मलाई प्राप्त होस् ॥३॥ श्रेष्ठता, स्वामित्व, दोषहरूप्रति रिस, अपराधप्रति क्रोध, अपरिमेयता, शीतल मधुर जल, जित्ने शक्ति, प्रतिष्ठा, सन्तानवृद्धि, घरबारीको विस्तार, लामो जीवन,

( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिःॐ सत्त्यञ्चमेश्श्रद्धाचमेजगच्चमेधनञ्चमेविश्श्वञ्चमेमहश्च्च मेक्क्रीडाचमेमोदश्च्चमेजातञ्चमेजनिष्ष्यमाणञ्चमेसूक्त्तञ्चमे सुकृतञ्चमेयज्ञेनकल्प्पन्ताम् ॥५॥

ऋतञ्चमेमृतञ्चमेयक्ष्मञ्चमेनामयच्चमेजीवातुश्च्चमेदीर्घायुत्त्वञ्चमेनमित्रञ्च मेभयञ्चमेसुखञ्चमेशयनञ्चमेसूषाश्च्चमेसुदिनञ्चमेयज्ञेनकल्प्पन्ताम् ॥६॥

यन्ताचमेधर्त्ताचमेक्षेमश्च्चमेधृतिश्च्चमेविश्श्वञ्चमेमहश्च्चमेसंविच्च मेज्ञात्रञ्चमेसूश्च्चमेप्रसूश्च्चमेसीरञ्चमेलयश्च्चमेयज्ञेनकल्प्पन्ताम् ॥७॥

शञ्चमेमयश्च्चमेप्प्रियञ्चमेनुकामश्च्चमेकामश्च्चमेसौमनसश्च्चमेभग श्च्चमेद्द्रविणञ्चमेभद्द्रञ्चमेश्श्रेयश्च्चमेवसीयश्च्चमेयशश्च्चमेयज्ञेन कल्प्पन्ताम् ॥८॥ (२)

---

अटुट वंशपरम्परा, धनधान्यको वृद्धि र विद्या आदि गुणहरूका उत्कर्ष यी सबै मैले गरेको यस यज्ञको रूपमा मलाई प्राप्त होऊन् ॥४॥ साँचो बोली, परलोकमा विश्वास, गाई आदि पशु, सुवर्ण आदि धन, अचल पदार्थ, कीर्ति, क्रीडा, क्रीडादर्शनबाट हुने आनन्द, पुत्रबाट उत्पन्न सन्तान, जन्मने सन्तान, शुभदायक मन्त्रहरूको समूह र मन्त्रहरूको पाठबाट हुने शुभ फल यी सम्पूर्ण मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥५॥ यज्ञ आदि कर्म र त्यसको स्वर्गादि फल, धातुक्षय आदि रोगहरूको अभाव र सामान्य व्याधिहरू नरहनु, आयु बढाउने साधन, दीर्घायु, शत्रुहरूको अभाव, निर्भयता, सुख, सुसज्जित ओछ्यान, सन्ध्यावन्दनबाट युक्त भएको बिहानी र यज्ञ, दान, अध्ययन आदिले युक्त भएको दिन यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥६॥ घोडा आदिको नियन्तृत्व र प्रजापालनको क्षमता, वर्तमान धनको रक्षणशक्ति, आपत्तिमा चित्तको स्थिरता, सबैको अनुकूलता, पूजासत्कार, वेदशास्त्र आदिको ज्ञान, विज्ञानसामर्थ्य, पुत्र आदिलाई प्रेरित गर्ने क्षमता, पुत्रोत्पत्ति आदिका लागि सामर्थ्य, हलो आदिद्वारा कृषिबाट अन्न उत्पादन र कृषिमा अनावृष्टि आदि विघ्नहरूको विनाश, यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥७॥ यो लोकको सुख, परलोकको सुख, प्रेम उत्पादक वस्तु, सजिलो परिश्रमबाट प्राप्त हुने पदार्थ, विषयभोगबाट प्राप्त हुने सुख, मनलाई स्वस्थ गराउने बन्धुबान्धव, सौभाग्य, धन, यो लोक र परलोकमा कल्याण, धनले भरिएको बस्न योग्य घर तथा कीर्ति यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥८॥

( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिःॐ ऊर्क्क्चमेसूनृताचमेपयश्चमेरसश्चमेघृतञ्चमेमधुचमेसग्धि श्चमेसपीतिश्चमेकृषिश्चमेवृष्टिश्चमेजैत्रञ्चमऽऔद्भिद्यञ्चमेयज्ञेन कल्प्पन्ताम्॥९॥

रयिश्चमेरायश्चमेपुष्टञ्चमेपुष्टिश्चमेविभुचमेप्प्रभुचमेपूर्णञ्चमे पूर्णतरञ्चमेकुयवञ्चमेक्षितञ्चमेन्नञ्चमेक्षुच्चमेयज्ञेनकल्प्पन्ताम्॥१०॥

वित्तञ्चमेवेद्यञ्चमेभूतञ्चमेभविष्यच्चमेसुगञ्चमेसुपत्थ्यञ्चमऽऋद्धञ्च मऽऋद्धिश्चमेक्लृप्तञ्चमेक्लृप्तिश्चमेमतिश्चमेसुमतिश्चमेयज्ञेन कल्प्पन्ताम्॥११॥

व्रीहयश्चमेयवाश्चमेमाषाश्चमेतिलाश्चमेमुद्गाश्चमेखल्वाश्चमेप्रि यङ्गवश्च्चमेणवश्चमेश्यामाकाश्चमेनीवाराश्चमेगोधूमाश्चमेमसूरा श्चमेयज्ञेनकल्प्पन्ताम्॥१२॥ (३)

---

अन्न, सत्य र मीठो बोली, दूध, दूधको सार, घ्यू, मह, बन्धुबान्धवसँग खानपान, धानको सिद्धि, अन्न उत्पादनका लागि अनुकूल वर्षा, विजयको शक्ति, तथा आँप आदि वृक्षहरूको उत्पत्ति यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥९॥ सुन, मौक्तिकादि मणिहरू, धनको प्रचुरता, शरीरको पुष्टि, व्यापकताको शक्ति, ऐश्वर्य, धन र पुत्रादिको बहुलता, हात्ती–घोडा आदिको अधिकता, कुत्सित धान्य, अक्षय अन्न, भात आदि सिद्धान्न तथा भोजन पचाउने शक्ति यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१०॥ पूर्वप्राप्त धन, पछि प्राप्त हुने धन, पूर्वप्राप्त खेत आदि र भविष्यमा प्राप्तहुने खेत, सुगम्य ठाउँ, अत्यन्त हितकारक पदार्थ, समृद्ध यज्ञफल, यज्ञादिको समृद्धि, कार्यसिद्ध गर्ने अगण्य सम्पत्ति, कार्यसाधनको शक्ति, पदार्थमात्रको निश्चय तथा दोधार परेको समयमा पनि निर्णय गर्ने बुद्धि यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥११॥ उत्कृष्ट कोटिको धान, जौ, मास, तिल, मुँग, चना, कागुनो, चिनकधान्य, सामा, तृणधान्य(सामाधान), गहुँ र मसुरो यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१२॥

( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिः॑ॐ अश्म्मा॑चमेमृत्ति॑काचमेगि॒रय॑श्च्चमेपर्व॑ताश्च्चमेसिक॑ता
श्च्चमेव॒नस्प्पत॑यश्च्चमेहिर॑ण्णयञ्चमेय॑श्च्चमेश्यामञ्चमेलोहञ्चमेसीस॑
ञ्चमेत्रपु॑चमेय॒ज्ञेन॑कल्प्पन्ताम्॥१३॥
अ॒ग्गिनश्च्च॑म॒ऽआप॑श्च्चमेवी॒रुध॑श्च्चम॒ऽओष॑धयश्च्चमेकृष्ट॒प॒च्च्याश्च्च॑मे
कृष्ट॒प॒च्च्याश्च्च॑मेग्ग्रा॒म्म्याश्च्च॑मेपशव॑ऽआर॒ण्ण्याश्च्च॑मेवि॒त्तञ्च॑मेवित्ति॑
श्च्चमेभूतञ्च॑मेभूतिश्च्चमेय॒ज्ञेन॑कल्प्पन्ताम्॥१४॥
वसु॑चमेवस॒तिश्च्च॑मेकर्म्म॑चमेशक्ति॑श्च्चमेर्थ॑श्च्चम॒ऽएम॑श्च्चमऽइ॒त्त्याच॑
मेगति॑श्च्चमेय॒ज्ञेन॑कल्प्पन्ताम्॥१५॥ (४)

( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिः॑ॐ अ॒ग्गिनश्च्च॑म॒ऽइन्द्र॑श्च्चमे॒सोम॑श्च्चम॒ऽइन्द्र॑श्च्चमेसवि॒ता
च॑म॒ऽइन्द्र॑श्च्चमे॒सर॑स्वतीचम॒ऽइन्द्र॑श्च्चमेपू॒षाच॑म॒ऽइन्द्र॑श्च्चमे॒बृह॒स्पति॑
श्च्चम॒ऽइन्द्र॑श्च्चमेय॒ज्ञेन॑कल्प्पन्ताम्॥१६॥
मि॒त्रश्च्च॑म॒ऽइन्द्र॑श्च्चमे॒वरु॑णश्च्चम॒ऽइन्द्र॑श्च्चमेधा॒ताच॑म॒ऽइन्द्र॑श्च्चमे॒

राम्रो ढुङ्गा र श्रेष्ठ माटो, गोवर्धन आदि साना पर्वत, हिमालय आदि विशाल पर्वत, बलौटो(बालुवामय) भूमि, वनस्पतिहरू, सुन, फलाम, तामा, काँस, सिसा तथा राङ् (धातुविशेष) आदि यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१३॥ पृथ्वीमा अग्निको तथा आकाशमा जलको अनुकूलता, साना साना घाँस, पाक्ने बित्तिकै सुक्ने धान्यादि, जोतेर र रोपेर उत्पन्न हुने तथा न जोतीकन नरोपीकन उत्पन्न हुने अन्न, गाई भैंसी आदि ग्राम्य पशु तथा हात्ती सिंह आदि जङ्गली पशु, पहिले प्राप्त भएको तथा भविष्यमा प्राप्त हुने धन, पुत्रादि तथा ऐश्वर्य यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१४॥ गाईगोरु आदि धन, बस्नको लागि राम्रो घर, अग्निहोत्रादि कर्म तथा उनीहरूको अनुष्ठानको सामर्थ्य, इच्छित पदार्थ, पाउन सकिने पदार्थ, चाहेको वस्तुको प्राप्तिको उपाय एवम् चाहेको वस्तुको प्राप्ति यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१५॥ अग्नि र इन्द्र, सोम तथा इन्द्र, सविता र इन्द्र, सरस्वती र इन्द्र, पूषा र इन्द्र, बृहस्पति र इन्द्र यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१६॥ मित्रदेव एवम् इन्द्र, वरुण तथा इन्द्र, धाता र इन्द्र, त्वष्टा तथा इन्द्र, मरुद्गण र इन्द्र, विश्वेदेव र इन्द्र यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१७॥ पृथ्वी र इन्द्र, अन्तरिक्ष र इन्द्र, स्वर्ग

त्वष्टाचमऽइन्द्रश्चमेमरुतश्चमऽइन्द्रश्चमेविश्श्वेचमेदेवाऽ
इन्द्रश्चमेयज्ञेनकल्प्यन्ताम्॥१७॥
पृथिवीचमऽइन्द्रश्चमेन्तरिक्षञ्चमऽइन्द्रश्चमेद्यौश्चमऽइन्द्रश्चमेसमा
श्चमऽइन्द्रश्चमेनक्षत्राणिचमऽइन्द्रश्चमेदिशश्चमऽइन्द्रश्चमे
यज्ञेनकल्प्यन्ताम्॥१८॥ (५)

(पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः)

हरिः ॐ अᳬशुश्चमेरश्मिश्चमेदाब्भ्यश्चमेधिपतिश्चमऽउपाᳬ
शुश्चमेन्तर्य्यामश्चमऽऐन्द्रवायवश्चमेमैत्रावरुणश्चमऽआश्श्विन
श्चमेप्प्रतिप्प्रस्थानश्चमेशुक्क्रश्चमेमन्थीचमेयज्ञेनकल्प्यन्ताम्॥१९॥
आग्ग्रयणश्चमेवैश्श्वदेवश्चमेध्रुवश्चमेवैश्श्वानरश्चमऽऐन्द्राग्ग्नश्च
मेमहावैश्श्वदेवश्चमेमरुत्त्वतीयाश्चमेनिष्क्केवल्ल्यश्चमेसावित्रश्चमे
सारस्वतश्चमेपात्नीवतश्चमेहारियोजनश्चमेयज्ञेनकल्प्यन्ताम्॥२०॥
स्रुचश्चमेचमसाश्चमेव्वायव्व्यानिचमेद्रोणकलशश्चमेग्ग्रावाण
श्चमेधिषवणेचमेपूतभृच्चमऽआधवनीयश्चमेव्वेदिश्चमेबर्हिश्चमे
ऽवभृथश्चमेस्वगाकारश्चमेयज्ञेनकल्प्यन्ताम्॥२१॥ (६)

(पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः)

तथा इन्द्र, बर्षको अधिष्ठातृदेवता तथा इन्द्र, नक्षत्र र इन्द्र, दिशाहरू र इन्द्र यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१८॥ अंशु, रस्मि, अदाभ्य, निग्राह्य, उपांशु, अन्तर्याम, ऐन्द्रवायव, मैत्रावरुण, आश्विन, प्रतिप्रस्थान, शुक्र र मन्थी यी सबै ग्रहहरू मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥१९॥ आग्रयण, वैश्वदेव, ध्रुव, वैश्वानर, ऐन्द्राग्न, महावैश्वदेव, मरुत्वतीय, निष्केवल्य, सावित्र, सारस्वत, पात्नीवत, एवम् हारियोजन यी सबै यज्ञग्रहहरू मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२०॥ स्रुक्, चमस, वायव्य, द्रोणकलश, ग्रावा, काष्ठफलक, पूतभृत्, आधवनीय, वेदी, कुशा, अवभृथ र शम्युवाक यी सबै यज्ञपात्रहरू मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२१॥ अग्निष्टोम, प्रवर्ग्य, पुरोडाश, सूर्यसम्बन्धी चरु, प्राण, अश्वमेध यज्ञ, पृथ्वी, अदिति, दिति, द्युलोक, विराट् पुरुषको अवयव, सबै प्रकारका शक्तिहरू र पूर्वादि दिशाहरू यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२२॥ व्रत, वसन्तादि ऋतुहरू, कृच्छ्र चान्द्रायणादि

अ॒ग्निश्च॑ मे घ॒र्म्मश्च॑ मे॒ऽर्क्कश्च॑ मे॒ सूर्य्य॑श्च मे प्प्राणश्च॑ मेऽश्वमे॒धश्च॑ मे
पृथि॒वी च॒ मेऽदि॑तिश्च मे॒ दिति॑श्च मे॒ द्यौश्च॑ मे॒ऽङ्गु॒लय॒: शक्क्व॑रयो॒ दिश॑
श्च मे य॒ज्ञेन॑ कल्प्पन्ताम् ॥ २२ ॥

व्र॒तञ्च॑ म ऽऋ॒तव॑श्च मे॒ तप॑श्च मे संवत्स॒रश्च॑ मे ऽहोरा॒त्रे ऽऊर्व॒ष्ठ्ठीवे
बृ॒हद्रथन्त॒रे च॑ मे य॒ज्ञेन॑ कल्प्पन्ताम् ॥ २३ ॥ (७)

( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिः ॐ एका॑ च मे ति॒स्रश्च॑ मे ति॒स्रश्च॑ मे॒ पञ्च॑ च मे॒ पञ्च॑ च मे स॒प्त च॑ मे स॒प्त
च॑ मे॒ नव॑ च मे॒ नव॑ च म॒ ऽएका॑दश च म॒ ऽएका॑दश च मे॒ त्रयो॑दश च मे॒ त्रयो॑दश
च मे॒ पञ्च॑दश च मे॒ पञ्च॑दश च मे स॒प्तद॑श च मे स॒प्तद॑श च मे॒ नव॑दश च मे॒ नव॑
दश च म॒ ऽएक॑वि॒ꣳशतिश्च म॒ ऽएक॑वि॒ꣳशतिश्च मे॒ त्रयो॑वि॒ꣳशतिश्च मे॒
त्रयो॑वि॒ꣳशतिश्च मे॒ पञ्च॑वि॒ꣳशतिश्च मे॒ पञ्च॑वि॒ꣳशतिश्च मे स॒प्त
वि॒ꣳशतिश्च मे स॒प्तवि॒ꣳशतिश्च मे॒ नव॑वि॒ꣳशतिश्च मे॒ नव॑वि॒ꣳशतिश्च म॒
ऽएक॑त्रि॒ꣳशच्च म॒ ऽएक॑त्रि॒ꣳशच्च मे॒ त्रय॑स्त्रि॒ꣳशच्च मे य॒ज्ञेन॑ कल्प्पन्ताम् ॥ २४ ॥

(८) ( पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः )

हरिः ॐ चत॑स्रश्च मे॒ऽष्टौ च॑ मे॒ऽष्टौ च॑ मे॒ द्वाद॑श च मे॒ द्वाद॑श च मे॒ षोड॑श च मे॒ षोड॑श
च मे वि॒ꣳशतिश्च॑ मे वि॒ꣳशतिश्च॑ मे॒ चतु॑र्वि॒ꣳशतिश्च मे॒ चतु॑र्वि॒ꣳशति
श्च मे॒ऽष्टावि॒ꣳशतिश्च मे॒ऽष्टावि॒ꣳशतिश्च मे॒ द्वात्रि॒ꣳशच्च मे॒ द्वात्रि॒ꣳशच्च मे॒

---

तप, प्रभवादि सम्वत्सर, दिनरात, जङ्घा तथा जानु, यी शरीरावयवहरू र बृहद् तथा रथन्तर साम, यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२३॥ एक र तीन, तीन तथा पाँच, पाँच र सात, सात तथा नौ, नौ र एघार, एघार र तेह्र, तेह्र र पन्ध्र, पन्ध्र र सत्र, सत्र र उन्नाइस, उन्नाइस र एक्काइस, एक्काइस र तेइस, तेइस र पच्चीस, पच्चीस र सत्ताइस, सत्ताइस र उनन्तीस, उनन्तीस र एकतीस, एकतीस र तेत्तीस यी सबै सङ्ख्याहरूद्वारा भनिने सम्पूर्ण श्रेष्ठ पदार्थहरू मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२४॥ चार र आठ, आठ र बाह्र, बाह्र र सोह्र, सोह्र र बीस, बीस र चौबीस, चौबीस र अट्ठाईस, अट्ठाईस र बत्तीस, बत्तीस र छत्तीस, छत्तीस र चालीस, चालीस र चौवालीस, चौवालीस र अट्चालीस यी सबै सङ्ख्याहरूबाट भनिने सम्पूर्ण श्रेष्ठ पदार्थहरू मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२५॥

षट्त्रिꣳशच्चमेषट्त्रिꣳशच्चमेचत्वारिꣳशच्चमेचत्वारिꣳशच्चमेचतुश्च्चत्वारिꣳ
शच्चमेचतुश्च्चत्वारिꣳशच्चमेष्टाचत्वारिꣳशच्चमेयज्ञेनेनकल्प्यन्ताम्॥२५॥

(९) (पुनर्नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः)

हरिः॑ ॐ त्र्यविश्च्चमेत्र्यवीचमेदित्त्यवाट्चमेदित्त्यौहीचमेपञ्चाविश्च्चमेपञ्चावीचमेत्रिवत्सश्च्चमेत्रिवत्साचमेतुर्य्यवाट्चमेतुर्य्यौहीचमेयज्ञेनेनकल्प्यन्ताम्॥२६॥

पष्ठवाट्चमेपष्ठौहीचमऽउक्षाचमेवशाचमऽऋषभश्च्चमेवेहच्चमेनड्वाँश्च्चमेधेनुश्च्चमेयज्ञेनेनकल्प्यन्ताम्॥२७॥ (१०)

(गणानान्त्वा इत्यारभ्य नमस्ते० इत्यादि ६६ मन्त्रात्मको नमकाध्यायः पठनीयः)

हरिः॑ ॐ व्वाजायस्वाहाप्प्रसवायस्वाहापिजायस्वाहाक्क्रतवेस्वाहाव्वसवेस्वाहाहर्प्पतयेस्वाहाह्नेमुग्धायस्वाहामुग्धायव्वैनꣳशिनायस्वाहा

डेढ बर्षको बाछो, डेढ बर्षकी बाछी, दुई वर्षको बाछा, दुई वर्षको बाछी, ढाई वर्षको गोरु, ढाई वर्षकी गाई, तीन वर्षको गोरु र तीन वर्षको गाई, साढे तीन वर्षको गोरु र साढे तीन वर्षको गाई यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२६॥ चार वर्षको गोरु, चार वर्षको गाई, सेचनमा समर्थ गोरु, बन्ध्या गाई, तरुण गोरु, गर्भघातिनी गाई, भार वहन गर्नसक्ने गोरु र नवप्रसूता गाई, यी सबै मैले गरेको यज्ञको फलको रूपमा मलाई प्राप्त होऊन् ॥२७॥ प्रचुर अन्नको उत्पत्ति गर्ने अन्नरूप चैत्रमासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। वैशाख मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। जलक्रीडामा सुखदायक ज्येष्ठ मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। यज्ञरूप आषाढ मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। चतुर्मासमा यात्राको निषेध गर्ने श्रावण मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। दिनको स्वामी सूर्यरूप भाद्र मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। तुषारो आदिबाट मोहकारक दिन भएको आश्विन मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। स्नान आदिबाट प्राणीहरूको पाप नाश गर्नाले मोहनिवर्तक र दिन थोरै घट्नाले विनाशशील कार्तिकमासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। सम्पूर्ण सृष्टिको विनाश भइसकेपछि पनि विद्यमान रहने अविनाशी विष्णुरूप मंसिर मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। अन्तिममा रहने तथा प्राणीहरूलाई पालन गर्ने पुष मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। सम्पूर्ण लोकको पालकरूप माघ मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ र सबै

विनृ॑शिनऽआन्त्यायनायस्वाहान्त्यायभौवनायस्वाहाभुवनस्यपतये
स्वाहाधिपतयेस्वाहाप्प्रजापतयेस्वाहा॥ इयन्तेराण्मित्त्रायग्यन्तासि
यमनऽऊर्ज्जेत्त्वावृष्ट्यैत्त्वाप्प्रजानान्त्वाधिपत्त्याय॥२८॥
आयुर्र्यज्ञेनकल्प्पताम्प्प्राणोयज्ञेनकल्प्पताञ्चक्षुर्र्यज्ञेनकल्प्पता
ᳪश्श्रोत्रंयज्ञेनकल्प्पतांवाग्ग्यज्ञेनकल्प्पताम्मनोयज्ञेनकल्प्पता
मात्मायज्ञेनकल्प्पतांब्रह्मायज्ञेनकल्प्पताञ्ज्योतिर्र्यज्ञेनकल्प्पतां
स्वर्र्यज्ञेनकल्प्पताम्पृष्ठंयज्ञेनकल्प्पतांयज्ञोयज्ञेनकल्प्पताम्॥
स्तोमश्च्चयजुश्च्चऽऋक्चसामचबृहच्चरथन्तरञ्च॥स्वर्द्देवाऽअग
न्मामृताऽअभूमप्प्रजापतेःप्प्रजाऽअभूमवेट्स्वाहा॥२९॥ (११)

प्राणीहरूको सबैभन्दा बढी पालनपोषण गर्ने फागुन मासको लागि यो श्रेष्ठ आहुति समर्पित छ। बाह्रै महिनाको अधिष्ठाता प्रजापतिको लागि यो श्रेष्ठ आहुति समर्पित छ। हे प्रजापतिस्वरूप अग्निदेव ! यो यज्ञस्थान तपाईंको राज्य हो, अग्निष्टोम आदि कर्ममा सबैको नियन्ता तपाईं मित्ररूप यस यजमानलाई प्रेरणा दिने खालको हुनुहुन्छ। अधिक अन्नादिको प्राप्तिको लागि म तपाईंको अभिषेक गर्दछु, वर्षाको लागि म तपाईंको अभिषेक गर्दछु र सम्पूर्ण प्राणीहरूमा स्वामित्व प्राप्तिको लागि म तपाईंको अभिषेक गर्दछु ॥२८॥ यज्ञको फलले मेरो आयु वृद्धि होस्, यज्ञको फलस्वरूप मेरो प्राण बलिष्ठ होस्, यज्ञको फलस्वरूप आँखाको ज्योति बढोस्, यज्ञको फलबाट सुन्नेशक्ति(श्रवणशक्ति)को वृद्धि होस्, यज्ञको फलस्वरूप वाणीमा श्रेष्ठता आओस्, यज्ञको फलस्वरूप मन सधैँ स्वच्छ रहोस्, यज्ञको फलस्वरूप आत्मा बलवान् होस्, यज्ञको फलस्वरूप सबै वेदहरू ममाथि प्रसन्न रहून्, यो यज्ञको फलस्वरूप मलाई परमात्माको दिव्यज्योति प्राप्त होस्, यज्ञको फलस्वरूप स्वर्गको प्राप्ति होस्, यज्ञको फलस्वरूप संसारको सर्वश्रेष्ठ सुख प्राप्त होस्, यज्ञको फलस्वरूप महायज्ञ गर्ने सामर्थ्य प्राप्त होस्, त्रिवृत्पञ्चदश आदि स्तोम, यजुर्मन्त्र ऋचाहरू, सामगानहरू, बृहत्साम र रथन्तर साम, यी सबै यज्ञको फलहरूबाट मलाई उपकार गर्नुहोला, म यज्ञको फलबाट देवत्वलाई प्राप्त गरी स्वर्ग जाऊँ र अमर होऊँ, यज्ञको प्रसादबाट हामीहरू हिरण्यगर्भ प्रजापतिको प्रियतम प्रजा बनौँ। समस्त देवताहरूको निम्ति यो वसोर्धारा हवन सम्पन्न भयो। यी सबै आहुतिहरू उहाँलाई जस्ताको तस्तै समर्पित छ ॥२९॥

Scanned by TapScanner

# शान्त्यध्याय:

हरिः॒ॐ ऋचंवाचम्प्रपद्येमनोयजुःप्रपद्येसामप्राणम्प्रपद्येचक्षुः श्श्रोत्रम्प्रपद्ये॥वागोजःसहौजोमयिप्राणापानौ॥१॥
यन्मेछिद्द्रञ्चक्षुषोहृदयस्यमनसोवातितृणम्बृहस्पतिर्मेतद्दधातु॥
शन्नोभवतुभुवनस्ययस्पतिः॥२॥
भूर्भुवःस्वः॥ तत्सवितुर्वरेण्ण्यम्भर्गोदेवस्यधीमहि॥
धियोयोनःप्रचोदयात्॥३॥
कयानश्चित्रऽआभुवदूतीसदावृधःसखा॥कयाशचिष्ठयावृता॥४॥
कस्त्वासत्योमदानाम्मःहिष्ठोमत्सदन्धसः॥दृढाचिदारुजेवसु॥५॥
अभीषुणःसखीनामविताजरितृणाम्॥शतम्भवास्यूतिभिः॥६॥

## *आठौं अध्याय*

*शान्तिसूक्त*

म ऋचारूप वाणीको शरणमा जान्छु, यजुःस्वरूप मनको शरणमा जान्छु, प्राणरूप सामको शरणमा जान्छु र म चक्षु र श्रोत्र इन्द्रियको शरणमा जान्छु। मेरा वाक् शक्ति, शरीरशक्ति र प्राण अपान वायु सबै सुस्थिर बनून् ॥१॥ मेरा नेत्रेन्द्रिय र हृदयमा जो कमी छ, मनमा जो व्याकुलता छ ती सबै दोषलाई बृहस्पतिले हटाइदिऊन्। अथवा यज्ञसमयमा मबाट शरीर, इन्द्रिय र मनसम्बन्धी त्रुटि भएको भए बृहस्पतिले क्षमा गरून्। सबै भुवनका मालिक यज्ञपुरुष भगवान् हाम्रा लागि कल्याणकारी बनून् ॥२॥ ती प्रकाशरूप जगत्स्रष्टा सवितादेवको तिनै लोकमा व्याप्त रहने सर्वोत्तम तेजको हामी ध्यान गर्दछौं। जो उनले हाम्रा बुद्धिलाई सत्कर्ममा निरन्तर प्रेरित गरून् ॥३॥ सँधै सबैलाई समृद्ध गर्न आश्चर्यरूप परमेश्वर कसरी कुन स्तुतिद्वारा आफ्नो शक्तिका साथ हाम्रा मित्र बन्लान् ?। अर्थात् हामीले उनको प्रीतिका लागि कस्ता उत्तम कर्म गरौं ? जसद्वारा उनी हाम्रा सहायक होलान् र आफ्नो पालनशक्तिबाट हामीलाई वृद्धि गर्ने सखा बन्लान् ? ॥४॥ हे परमेश्वर ! मदजनक हविहरूमा श्रेष्ठ सोमरूप अन्नको कुन भागले हजुरलाई बढी खुसी बनाउला ? हामीहरू हजुरको प्रसन्नताका लागि धन आदि वस्तुहरू हजुरलाई अर्पण गर्न चाहन्छौं ॥५॥ हे परमेश्वर ! हजुर मित्रलाई स्तुति गर्ने हामी ऋत्विक्हरूको रक्षक हुनुहुन्छ र हाम्रो रक्षाका लागि अभिमुख हुँदै हजुरले अनन्तरूप धारण गर्नुहुन्छ ॥६॥

कयात्वन्नऽऊत्त्याभिप्प्रमन्दसेवृषन्॥कयास्तोतृब्भ्यऽआभर॥७॥
इन्द्रोविश्श्वस्यराजति॥शन्नोऽअस्तुद्विपदेशञ्चतुष्प्पदे॥८॥
शन्नोमित्रःशंवरुणःशन्नोभवत्त्वर्य्यमा॥
शन्नऽइन्द्रोबृहस्प्पतिःशन्नोविष्णुरुरुक्क्रमः॥९॥
शन्नोवातःपवताथंशन्नस्तपतुसूर्य्यः॥
शन्नःकनिक्क्रदद्देवःपर्ज्जन्न्योऽअभिवर्षतु॥१०॥
अहानिशम्भवन्तुनःशथं रात्रीःप्प्रतिधीयताम्॥
शन्नऽइन्द्राग्ग्नीभवतामवोभिःशन्नऽइन्द्रावरुणारातहव्या॥
शन्नऽइन्द्रापूषणावाजसातौशमिन्द्रासोमासुवितायशंय्योः॥११॥
शन्नोदेवीरभिष्टयऽआपोभवन्तुपीतये॥शंय्योरभिस्स्रवन्तुनः॥१२॥
स्योनापृथिविनोभवानृक्षरानिवेशनी॥यच्छानःशर्म्मसप्प्रथाः॥१३॥

हे इन्द्रदेव ! हजुर कुन तृप्तिद्वारा हामीलाई प्रसन्न बनाउनुहुन्छ ? र कुन दिव्यरूप धारण गरी हजुरको स्तुति गर्नेवाला हामी उपासकहरूको कामनालाई पूरा गर्नुहुन्छ ? ॥७॥ सबैका मालिक भएका परमेश्वर चारैतिर प्रकाशमान छन् । उनी हाम्रा पुत्र आदि द्विपाद् परिजनको र गाई आदि चतुष्पात् प्राणीहरूको कल्याण गर्ने बनून् ॥८॥ मित्रदेवताले हामीलाई कल्याण गरून् । वरुण देवताले र अर्यमाले कल्याण गरून् । इन्द्रदेवताले कल्याण गरून् । बृहस्पतिले कल्याण गरून् र विस्तीर्ण चरणवाला विष्णु भगवान्‌ले पनि हामीलाई कल्याण गरून् ॥९॥ वायुदेव हाम्रा लागि सुखकारी बनेर प्रवाहित होऊन् । सूर्यदेव हाम्रा लागि सुखदायी बनेर तपित होऊन् र पर्जन्य देवताले सुशब्द गर्दै हाम्रा लागि सुखदायी भई वर्षा गरून् ॥१०॥ दिन हाम्रा लागि सुखकारी बनून् । रात्रि पनि हाम्रा लागि सुखदायी बनून् । हाम्रो रक्षा गर्ने इन्द्र र अग्नि शुभ होऊन् । हविद्वारा सन्तुष्ट इन्द्र र वरुण हाम्रा लागि कल्याणकारी होऊन् । अन्न उत्पादन गर्ने इन्द्र र पूषा देवता हाम्रा सुखकारी बनून् । यस्तै इन्द्र र सोमदेवता श्रेष्ठ उत्पादन गर्ने, रोग नाश गर्ने र भय हटाउन हाम्रा लागि कल्याणकारी बनून् ॥११॥ दीप्तिमान् जल हाम्रा अभीष्ट स्नानका लागि सुखकर बनून् । पिउदा स्वादिष्ट र स्वास्थ्यकर होऊन् । यी जलले हाम्रा रोगशोक हटाउँदै निरन्तर प्रवाहित भइरहून् ॥१२॥ हे पृथिवी ! हजुर कण्टकरहित वा दुःख नदिने बनी विस्तारयुक्त भई हाम्रा लागि सँधै सुखदायी हुनुहोस् र हामीलाई शरण दिनुहोस् ॥१३॥

आपोहिष्ठामयोभुवस्तानऽऊर्ज्जेदधातन॥महेरणायचक्षसे॥१४॥
योव्वः शिवतमोरसस्तस्यभाजयतेहनः॥उशतीरिवमातरः॥१५॥
तस्म्माऽअरङ्गमामवोयस्यक्षयायजिन्वथ॥आपोजनयथाचनः॥१६॥
द्यौःशान्तिरन्तरिक्षꣳशान्तिःपृथिवीशान्तिरापःशान्तिरोषधयःशान्तिः॥
व्वनस्प्पतयःशान्तिर्व्विश्श्वेदेवाःशान्तिर्ब्ब्रह्मशान्तिःसर्व्वꣳशान्तिः
शान्तिरेवशान्तिःसामाशान्तिरेधि॥१७॥
दृतेदृꣳहमामित्रस्यमाचक्षुषासर्व्वाणिभूतानिसमीक्षन्ताम्॥
मित्रस्याहञ्चक्षुषासर्व्वाणिभूतानिसमीक्षे॥
मित्रस्यचक्षुषासमीक्षामहे॥१८॥
दृतेदृꣳहमाज्ज्योक्तेसन्दृशिजीव्यासञ्ज्योक्ते॥
सन्दृशिजीव्यासम्॥१९॥

हे जलदेव ! हजुर जल दिनेवाला हुनुहुन्छ । सुख चाहने व्यक्तिलाई स्नानपानादिद्वारा सुख दिनुहुन्छ । हाम्रो रमणीय दर्शनका लागि ब्रह्मानन्दको अनुभवको स्वरूपमा हाम्रा सामु स्थापित हुनुहोस् ॥१४॥ हे जलदेवता हजुरको जो शान्त परमसुखको हेतुभूत रस यहाँ रहेको छ । हामी त्यस सुखका भागी त्यसरी नै बनौं, जसरी आमाले खुसी भई आफ्ना बच्चालाई दूध पिलाउनुहुन्छ ॥१५॥ हे जलदेव ! हजुरको त्यो रसप्राप्तिका लागि हामी छिटो यात्रा गर्न चाहन्छौं । जसबाट हजुरले सम्पूर्ण जगत्लाई तृप्त बनाउनुहुन्छ र हामीलाई उत्पन्न गराउनुहुन्छ ॥१६॥ द्युलोकरूप शान्ति, अन्तरिक्ष रूप शान्ति, भूलोकरूप शान्ति, जलरूप शान्ति, ओषधीरूप शान्ति, वनस्पतिरूप शान्ति, सर्वदेवरूप शान्ति, ब्रह्मरूप शान्ति, सर्वजगत्रूप शान्ति र संसारको जो स्वाभाविक शान्ति छ त्यो शान्ति परमात्माको कृपाले मलाई प्राप्त हओस् ॥१७॥ हे परमेश्वर ! हजुरले मलाई दृढ बनाइदिनुहवस् । सबै प्राणीहरूले मलाई मित्रदृष्टिले हेरून् र मैले पनि सबैलाई मित्रवत् देख्न सकूँ । हामी सबै पारस्परिक द्रोहभावले रहित भएर सबैलाई मित्रवत् व्यवहार गर्न सकौं ॥१८॥ हे भगवन् ! हजुरले मलाई सर्वतोभावेन दृढ बनाउनुहोस् । हजुरको दर्शनले अथवा कृपादृष्टिले म दीर्घकालसम्म जीवित रहन सकूँ ॥१९॥ हे अग्निदेव ! सबै रसलाई आकर्षित गर्ने हजुरको तेजस्वी ज्वालालाई नमस्कार गर्दछु । हजुरको प्रकाशरूप तेजलाई पनि नमस्कार गर्दछु । हजुरको ज्वालाले हामीलाई होइन अरुलाई नै तप्त

नमस्तेहरसेशोचिषेनमस्तेऽअस्त्वर्च्चिषे॥
अन्न्याँस्तेऽअस्म्मत्तपन्तुहेतयःपावकोऽअस्म्मब्भ्यᳬशिवोभव॥२०॥
नमस्तेऽअस्तुविद्युतेनमस्तेस्तनयित्नवे॥
नमस्तेभगवन्नस्तुयतःस्वःसमीहसे॥२१॥
यतोयतःसमीहसेततोनोऽअभयङ्कुरु॥
शन्नःकुरुप्प्रजाब्भ्योभयन्नःपशुब्भ्यः॥२२॥
सुमित्रियानऽआपऽओषधयःसन्तुदुर्म्मित्रियास्तस्म्मै
सन्तुयोस्म्मान्द्वेष्टियञ्चवयन्द्विष्म्मः॥२३॥
तच्चक्षुर्देवहितम्पुरस्ताच्छुक्क्रमुच्चरत्॥
पश्येमशरदःशतञ्जीवेमशरदःशतᳬशृणुयामशरदःशतम्प्रब्ब्रवाम
शरदःशतमदीनाःस्यामशरदःशतम्भूयश्श्चशरदःशतात्॥२४॥

*॥ इत्यष्टमोऽध्यायः ॥*

गराओस् र हजुरले हाम्रो चित्तशुद्धिको कारण बनी हाम्रो कल्याण गर्नुहोस् ॥२०॥ विद्युत्‌रूपी हजुरलाई नमस्कार छ । गर्जना गर्ने मेघरूप हजुरलाई नमस्कार छ । हजुर सबै प्राणीलाई स्वर्गीय सुख दिने चेष्टा गर्नुहुन्छ । अतः हजुरलाई नमस्कार छ ॥२१॥ हे परमेश्वर ! हजुर जता–जताबाट हाम्रो कल्याण गर्न चाहनुहुन्छ त्यतै–त्यतैबाट भयरहित बनाइदिनुहोस् । हामा सन्ततिहरूको कल्याण गर्नुहोस् र हाम्रा पशुहरूलाई पनि भयमुक्त गरिदिनुहोस् ॥२२॥ जल र औषधिहरू हाम्रा लागि कल्याणकारी बनून् भने हाम्रा शत्रुहरूप्रति अमङ्गलकारी बनून् जसले हामीमाथि द्वेषभाव राख्छन् एवं हामी जसमाथि द्वेषभाव राख्दछौं ॥२३॥ देवताहरूद्वारा प्रतिष्ठित जगत्‌का नेत्ररूप भएका दिव्य, तेजोमय भगवान् आदित्य पूर्वतिर उदाइ–रहनुभएको छ । वहाँको कृपाले हामीहरू सयौं वर्षसम्म देख्न सकौं अर्थात् हाम्रा चक्षुरिन्द्रय ज्योतिर्मय बनिरहून् । सयौं वर्षसम्म सुखपूर्वक बाँच्न सकौं । सयौं वर्षसम्म हाम्रा श्रोत्रेन्द्रियले सुन्न सकून् । सयौं वर्षसम्म हाम्रा वाणीहरू अस्खलित बनून् । हामी सयौं वर्षसम्म दीनहीन नबनौं । सयौं वर्षभन्दा पनि धेरै हामीहरू इन्द्रियका शक्तिले युक्त भई कल्याणमय कर्ममा जीवन लगाइरहन सकौं ॥२४॥

*॥ आठौँ अध्याय समाप्त ॥*

# अथ स्वस्तिप्रार्थनामन्त्राः

हरिः ॐ स्वस्तिनऽइन्द्रोवृद्धश्रवाःस्वस्तिनःपूषाविश्ववेदाः॥
स्वस्तिनस्ताक्ष्योऽअरिष्टनेमिःस्वस्तिनोबृहस्पतिर्दधातु॥१॥
पयःपृथिव्याम्पयऽओषधीषुपयोदिव्यन्तरिक्षेपयोधाः॥
पयस्वतीःप्प्रदिशःसन्तुमह्यम्॥२॥
विष्णोरराटमसिविष्णोःश्नप्त्रेस्थोविष्णोः
स्यूरसिविष्णोर्ध्रुवोसि॥ वैष्णवमसिविष्णवेत्त्वा ॥३॥
अग्निर्देवतावातोदेवतासूर्योदेवताचन्द्रमादेवतावसवोदेवता
रुद्रादेवतादित्त्यादेवतामरुतोदेवताविश्श्वेदेवादेवताबृहस्पतिर्देव
तेन्द्रोदेवतावरुणोदेवता ॥४॥

---

## स्वस्ति प्रार्थनाका मन्त्रहरू

कीर्तियुक्त इन्द्रले हाम्रो कल्याण गरून् । सर्वज्ञ पूषा(सूर्य)देवले कल्याण गरून् । चक्रधाराझैं अप्रतिहत गति भएका ताक्ष्र्य भगवान्ले हामीलाई कल्याण गरून् । वाणीका अधिष्ठाता देवता बृहस्पतिले हामीमाथि कल्याण गरून् ॥१॥ हे अग्निदेव ! हजुरले हाम्रा लागि पृथिवीमा रसधारण गर्नुहोस् । औषधीहरूमा रस भरिदिनुहोस् । स्वर्ग र अन्तरिक्षमा रस स्थापित गर्नुहोस् । हामीले दिइएका आहुतिद्वारा दिशा र विदिशाहरू हाम्रा लागि रसपूर्ण बनून् ॥२॥ हे वंश ! तिमी यज्ञरूप व्यापक विष्णुदेवका ललाटस्थानीय हौ । ललाटका प्रान्तद्वय यज्ञरूप विष्णुका ओष्ठसन्धि हौ । हे बृहत्सूचि तिमी यज्ञमण्डपका सूचि हौ । हे ग्रन्थि ! तिमी विष्णुरूप मण्डपका ग्रन्थि हौ । हे हविर्धान ! तिमी विष्णुसम्बन्धी हौ । अतः विष्णुप्रीत्यर्थ म तिमीलाई स्पर्श गर्दछु ॥३॥ अग्निदेवता, वायुदेवता, सूर्यदेवता, चन्द्रदेवता, वसुदेवता, रुद्रदेवता, आदित्यदेवता, मरुत्देवता, विश्वेदेवदेवता, बृहस्पतिदेवता, इन्द्रदेवता र वरुणदेवताको सम्झना गर्दै म यी इष्टकाको स्थापना गर्दछु ॥४॥

**ॐ सद्योजातं प्रपद्यामि सद्योजाताय वै नमो नमः ।**
**भवे भवे नाति भवे भवस्व मां भवोद्भवाय नम ॥५॥**
**वामदेवाय नमो ज्येष्ठाय नमः श्रेष्ठाय नमो रुद्राय नमः ।**
**कालाय नमः कलविकरणाय नमो बलविकरणाय नमो बलाय नमो बलप्रमथनाय नमः सर्वभूतदमनाय नमो मनोन्मनाय नमः ॥६॥**
**अघोरेभ्योऽथघोरेभ्यो घोरघोरतरेभ्यः ।**
**सर्वेभ्यः सर्वशर्वेभ्यो नमस्तेऽअस्तु रुद्ररूपेभ्यः ॥७॥**
**तत्पुरुषाय विद्महे महादेवाय धीमहि तन्नो रुद्रः प्रचोदयात् ॥८॥**
**ईशानः सर्वविद्यानामीश्वरः सर्वभूतानाम् ।**
**ब्रह्माधिपतिर्ब्रह्मणोऽधिपतिर्ब्रह्माशिवोमेऽअस्तुसदाशिवोम् ॥९॥**

---

म सद्योजात नामक परमेश्वरका शरणमा जान्छु । पश्चिमाभिमुख सद्योजात भगवान्लाई नमस्कार छ । हे रुद्रदेव ! मलाई बारम्बार जन्म दिने काम नगरिदिनुहोस् । संसारबाट उद्धार गर्ने हजुरलाई नमस्कार छ ॥५॥ उत्तराभिमुख वामदेव भगवान्लाई नमस्कार छ । ज्येष्ठ, श्रेष्ठ, रुद्र, काल, कलविकरण, बलविकरण, बल, बलप्रमथन, सर्वभूतदमन र मनोन्मन यी हजुरका स्वरूप हुन् । यिनै तत्त्वका अधिष्ठाता हजुरलाई नमस्कार छ ॥६॥ दक्षिणाभिमुख सत्त्वगुणयुक्त अघोर भगवान्लाई नमस्कार छ । यसैगरी रजोगुणयुक्त घोर र तमोगुणयुक्त घोरतर रुद्र भगवान्लाई नमस्कार छ । हे सर्वदेव ! हजुरका रुद्र आदि सम्पूर्ण रूपहरूलाई नमस्कार छ ॥७॥ हामी पूर्वाभिमुख तत्पुरुष भगवान्लाई गुरुवचन र शास्त्रप्रमाणबाट जान्दछौं । त्यस्ता भगवान्को ध्यान गर्दछौं । ती रुद्रदेवले हामीलाई सत्कर्ममा प्रेरित गरून् ॥८॥ ऊर्ध्वमुखी ईशान भगवान्लाई नमस्कार छ । जो सम्पूर्ण विद्याका र सम्पूर्ण प्राणीका मालिक हुनुहुन्छ । ब्रह्मारूप परमात्मालाई र ब्रह्माका मालिक परमात्मालाई मेरो सदा सर्वदा नमस्कार छ । उनका कृपाले मेरो सँधै कल्याण होस् ॥९॥

शिवोनामासिस्वधितिस्तेपितानमस्तेऽअस्तुमामाहिꣳसीः ॥ निर्वर्त्तया
म्म्यायुषेन्नाद्यायप्प्रजननायरायस्पोषायसुप्प्रजास्त्वायसुवीर्य्याय॥१०॥
विश्श्वानिदेवसवितर्दुरितानिपरासुव ॥ यद्भद्रन्तन्नऽआसुव ॥११॥
द्यौःशान्तिरन्तरिक्षꣳशान्तिः पृथिवीशान्तिरापः शान्तिरोषधयः शान्तिः॥
वनस्प्पतयः शान्तिर्व्विश्श्वेदेवाःशान्तिर्ब्ब्रह्मशान्तिः सर्व्वꣳ शान्तिः
शान्तिरेवशान्तिः सामाशान्तिरेधि॥१२॥

**ॐ सर्व्वेषां वा एष व्वेदानाꣳ रसोयत्सामसर्व्वेषामेवैनमेतद्वेदानाꣳ रसेनाभिषिञ्चति ॥१३॥**

**इति स्वस्तिप्रार्थनमन्त्राः ॥ ॐ शान्तिः शान्तिः शान्तिः ॥**

***ॐ हर ! हर !! हर !!! महादेव शम्भो ! श्रीसाम्बसदाशिवार्पणमस्तु ॥***

---

(१० औँ मन्त्रको अर्थ पृ. ७७ मा) हे सूर्य भगवन् ! हजुरले मेरा सबै पाप नाश गरिदिनुहोस् र मेरो लागि जे कल्याणकारी छ, त्यो प्रदान गर्नुहोस् ॥११॥ (१२ औँ मन्त्रको अर्थ पृ. ८२ मा) सबै वेदका तत्त्वरूप रस जो सामवेदरूप भगवान् हुनुहुन्छ उनै भगवानले उक्त भगवद्रसद्वारा सबै वेदको अभिषिञ्चन गर्नुहुन्छ ॥१३॥

**॥ भगवान्का अनुग्रहले तीन तापहरू शान्त होऊन् ॥**



# अथ षडङ्गन्यासः

हरिः ॐमनोजूतिर्ज्जुषतामाज्ज्यस्यबृहस्पतिर्य्यज्ञमिमतनोत्वरिष्टंय्यज्ञꣳ समिमन्दधातु । व्विश्श्वेदेवासऽइहमादयन्तामोंऽप्रतिष्ठ ॥

ॐ हृदयाय नमः ।

ॐ अबोद्ध्यग्निः समिधाजनानाम्प्रतिधेनुमिवायतीमुषासम् । यह्वाऽइवप्प्रवयामुज्जिहानाः प्रभानवः सिस्त्रतेनाकमच्छ ॥

ॐ शिरसे स्वाहा ।

ॐ मूर्द्धानन्दिवोऽअरतिम्पृथिव्याव्वैश्श्वानरमृतऽआजातमग्निम् । कविꣳ सम्म्राजमतिथिञ्जनानामासन्नापात्रञ्जनयन्तदेवाः ॥

ॐ शिखायै वषट् ।

ॐ मर्म्माणितेवर्म्मणाछादयामिसोमस्त्वाराजामृतेनानुवस्ताम् । उरोर्व्वरीयोव्वरुणस्तेकृणोतुजयन्तन्त्वानुदेवामदन्तु ॥

ॐ कवचाय हुम् ।

ॐ विश्श्वतश्श्चक्षुरुतव्विश्श्वतोमुखोव्विश्श्वतोबाहुरुतव्विश्श्वतस्पात् । सम्बाहुभ्यान्धमतिसम्पतत्रैद्द्यावाभूमीजनयन्देवऽएकः ॥

ॐ नेत्रत्रयाय वौषट् ।

ॐ मानस्तोकेतनयेमानऽआयुषिमानोगोषुमानोऽअश्श्वेषुरीरिषः । मानोव्वीरान्रुद्द्रभामिनोव्वधीर्हविष्मन्तः सदमित्त्वाहवामहे ॥

ॐ अस्त्राय फट् ।

*॥ इति षडङ्गन्यासः ॥*

## ध्यानम्

ध्यायेन्नित्यं महेशं रजतगिरिनिभं चारुचन्द्रावतंसं
रत्नाकल्पोज्ज्वलाङ्गं परशुमृगवराभीतिहस्तं प्रसन्नम् ।
पद्मासीनं समन्तात् स्तुतममरगणैर्व्याघ्रकृत्तिं वसानं
विश्वाद्यं विश्ववन्द्यं निखिलभयहरं पञ्चवक्त्रं त्रिनेत्रम् ॥

# अथ उत्तराङ्गपूजा

उत्तराङ्गन्यासं विधाय पुनः सङ्क्षेपेण पञ्चामृतस्नानं कृत्वा स्नानाङ्गमाचमनीयं समर्प्य शुद्धवस्त्रेण सम्प्रोक्ष्य पूजयेत् –

सुगन्धितैलम्–

**ॐ त्र्यम्बकं यजामहेसुगन्धिं पुष्टिवर्धनम् ।**
**उर्वारुकमिव बन्धनान्मृत्योर्मुक्षीय मामृतात् ॥**
**ॐ त्र्यायुषञ्जमदग्नेः कश्यपस्य त्र्यायुषम् ॥**
**यद्देवेषुत्र्यायुषन्तन्नोऽअस्तु त्र्यायुषम् ॥**

*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* सुगन्धितैलादिद्रव्यं समर्पयामि ॥

वस्त्रम्–

**ॐ असौयोऽवसर्प्पतिनीलग्रीवोव्विलोहितः ॥**
**उतैनङ्गोपाऽअदृश्रन्नदृश्रन्नुदहार्यः सदृष्ट्वोमृडयातिनः ॥**
**ॐ सर्वभूषाधिके सौम्ये लोकलज्जानिवारणे ।**
**मयोपपादिते तुभ्यं वाससी प्रतिगृह्यताम् ॥**

*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* वस्त्रं समर्पयामि ॥

यज्ञोपवीतम् –

**ॐ नमोस्तुनीलग्रीवायसहस्राक्षायमीढुषे ॥**
**अथोयेऽअस्यसत्त्वानोहन्तेब्भ्योकरन्नमः ॥**
**ॐ नवभिस्तन्तुभिर्युक्तं त्रिगुणं देवतामयम् ।**
**उपवीतं चोत्तरीयं गृहाण परमेश्वर ॥**

*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* यज्ञोपवीतं समर्पयामि ॥

उपवस्त्रम्–

**ॐ सुजातो ज्ज्योतिषा सह शर्म्म वरूथमासदत्स्व ॥**
**व्वासोऽअग्ने विश्वरूप ꣡ संव्ययस्व विभावसो ॥**

*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* उपवस्त्रं समर्पयामि ॥

चन्दनम् –

**ॐ प्रमुञ्चधन्वनस्त्वमुभयोरात्क्न्योज्ज्याम् ॥**
**याश्च्चतेहस्तऽइषवः परताभगवोव्वप ॥**

**ॐ श्रीखण्डं चन्दनं दिव्यं गन्धाढ्यं सुमनोहरम् ।**
**विलेपनं सुरश्रेष्ठ चन्दनं प्रतिगृह्यताम् ॥**
*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* चन्दनानुलेपनं समर्पयामि ॥

अक्षताः –

**ॐ अक्षन्नमीमदन्तह्यवप्रियाऽअधूषत ।**
**अस्तोषत स्वभानवोविप्रानविष्ठयामतीयोयान्विन्द्रते हरि ॥**
**ॐ अक्षतांश्च सुरश्रेष्ठ कुङ्कुमाक्तान् सुशोभनान् ।**
**मया निवेदितान् भक्त्या गृहाण परमेश्वर ॥**
*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* अलङ्करणार्थेऽक्षतान् समर्पयामि ॥

भस्म–

**ॐ त्र्यम्बकंय्यजामहेसुगन्धिं पुष्टिवर्धनम् ।**
**उर्वारुकमिवबन्धनान्मृत्योर्मुक्षीयमामृतात् ॥**
*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* भस्मानुलेपनं समर्पयामि ॥

पुष्पाणि –

**ॐ विज्यन्धनुः कपर्द्दिनो विशल्यो बाणवाँऽउत ।**
**अनेशन्नस्ययाऽइषवऽआभुरस्य निषङ्गधिः ॥**
**ॐ माल्यादीनि सुगन्धीनि मालत्यादीनि वै प्रभो ।**
**मयानीतानि पुष्पाणि पूजार्थं प्रतिगृह्यताम् ॥**
*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* पुष्पाणि समर्पयामि ॥

नानापरिमलद्रव्याणि–

ॐ अहिरिवभोगैः पर्य्येति बाहुञ्ज्याया हेतिम्परिबाधमानाः ।॥
हस्तघ्नोविश्वा वयुनानि विद्वान् पुमान् पुमा ꣳ सम्परिपातुविश्वतः ॥
ॐ दिव्यगन्धसमायुक्तं नानापरिमलान्वितम् ।
गन्धद्रव्यमिदं भक्त्या दत्तं स्वीकुरु शोभनम् ॥
*ॐ भूर्भुवः स्वः श्रीसाम्बसदाशिवाय नमः,* नानापरिमलद्रव्याणि समर्पयामि ॥

